# परदेशीका कोसेली कविताहरू



विश्वास दीप तिगेला लिम्बू

परदेशीका कोसेली
कविताहरू

**"रमाउछ मन पनि, चन्द्र उदाइदिए
सुन्दर बन्छ जीवन, प्रीत तिम्रो पाए"**


- लेखक : विश्वास दीप तिगेला लिम्बू
- प्रकाशक : पारूहाङ–सुम्निमा युनेस्को क्लब,
  पो.ब.नं.७४१२ ज्ञानेश्वर,
  काठमाडौ ।
- आवरण : टेकवीर मुखिया
- संस्करण : पहिलो २०५५ (१००० प्रति)

- कम्प्यूटर : ललित कम्प्यूटर
  पुल्चोक, ललितपुर
  पो.ब.नं.९०११

- मूल्य रू. : (सहयोग स्वरूप रू. ४५)
  $2, £2

# समर्पण

बाध्यता त्यस बेला हुन्छ ,जुन बेला पर देश नगई हातमुख जोड्नै सकिन्दैन अर्थात् ईच्छाको विपरीत कसैको दबाबमा विदेशिनु परोस् । यसर्थ विदेशिनु हाम्रो बाध्यता होइन, परम्परा एवं वातावरण हो । समर्पण वहाँहरुलाई जो अन्यासै भौतारिएर विदेशीएका समस्त नेपालीहरु र आमाबुबालाई ।



# हाम्रो पहिलो प्रकाशन

शिक्षा, संस्कृति, पर्यावरण, सञ्चार तथा विज्ञान जस्ता मानवोचित तत्वको लागि गर्नु पर्ने सकारात्मक कार्यलाई आत्मसात गर्दै स्थापित पारूहाङ-सुम्निमा युनेस्को क्लब (PARUHANG- UNESCO-CLUB) काठमाण्डौले विशेष गरी भाषा साहित्य संस्कृति एवं शिक्षा र सञ्चारमा जोड दिँदै आएको छ । यसै अनुरूप शिक्षा जगतमा देखा परेका न्यूनकरणलाई अझ बढी र सकारात्मक तवरबाट योगदान समेत पुग्न सकोस भन्ने (हाम्रो) क्लबको मान्यता छ । तसर्थ शैक्षिक जगतप्रति देखिने नेपाली समाजको जनचेतनालाई अझ विकसित बनाउन हरेक क्षेत्रबाट सहयोग पुऱ्याउने लक्ष्य अनुरूप नेपाली साहित्यका विविध पक्षहरूमध्ये यो प्रथम पटक प्रतिभावान एवं केही गर्नु पर्छ भन्ने भावनाले ओतप्रोत एवं क्रियाशील प्रतिभाका धनी विश्वास दीप तिगेला लिम्बूका रचनाहरू "परदेशीका कोसेली कविताहरू" संग्रह प्रकाशन गर्न पाउँदा पारूहाङ-सुम्निमा क्लब आभारी छ ।

यस प्रकाशन कृतिले प्रतिभाका पलाउँदो मुनालाई अरु आफ्नो सृजनाहरू चम्किला र अगाडि बढाउने हौशला मिल्नेछ भन्ने विश्वास लिएका छौं । साहित्य विधामा कविताको माध्यमबाट व्यक्ति, समाजका निम्ति समेत केही प्रेरणा बन्न सक्दछ । सोही कविताबाट निस्केको मर्मस्पर्शी, वेदनायुक्त भावनात्मक आवाजले कसैको निम्ति प्रेरणाको स्रोत समेत बन्न पुग्दछ । तिनै सृजनशील व्यक्तिका सृजनाबाट बन्ने हरेक समय र परिस्थितिको रूपरेखा, चिन्तन आदिको चित्रण नै समाज, व्यक्तिको लागि शिक्षा बन्न सक्दछ । त्यसै बमोजिम प्रतिभावान् सर्जक तिगेला लिम्बूको आफ्ना साहित्यमा निजीपनको प्रस्फुटन पर्याप्त पाइन्छ ।

अन्तमा यसैगरी अनन्य नयाँ प्रतिभा, चिन्तक, विचारकहरूको लेख, रचना र ऐतिहासिक दस्तावेज जस्ता सामग्रीहरूको समेत प्रकाशन गर्न सकौं भन्ने अपेक्षा सहित कवि तिगेला लिम्बूका सृजनशील भविष्यको यात्रा उज्ज्वल देखिन्छ । वहाँले आफ्नो यात्रालाई थप निरन्तरता दिन सकुन् । प्रकाशित यस परदेशीका कोसेली कविताहरूले लोकप्रियता एवं अपार सफलता पाउन सकुन् । यही छ हाम्रो कामना । धन्यवाद !


–विश्वराज किरात

अध्यक्ष

पारूहाङ-सुम्निमा युनेस्को क्लब

ज्ञानेश्वर, काठमाण्डौ,

पो.ब. नं. ७४१२

# दुई शब्द

सामाजिक प्राणी भएर पनि हो कि मनुष्यले आफ्नो अन्तरमनका भावानुभूतिहरूलाई बोलेर मात्र होइन लेखेर, रङ्गमा कोरेर वा सुरिलो स्वरमा गाएर सुन्दर र कलात्मक रूपमा अभिव्यक्ति गर्दछन्। युगौदेखि मान्छेले आफ्ना जीवनका अनेकविध भोगाई, मन तथा मस्तिष्कमा गुम्फित भाव वा विचारहरूलाई साहित्यका माध्यमबाट सशक्त र मूर्तरूपमा अरूहरूका समक्ष प्रस्तुत गरेर आफू मुक्त र शान्त भएको असीम सुखको अनुभूति पनि पाउँदै आएको छ।

हुन पनि जीवन भोग्नेको व्यतित्वको छाप किन्चित भए पनि साहित्यमा पर्छ नै। वर्तमानमा जीवनले भोग्नु परेको उत्पीडन, शोषण, पीडा र विसङ्गती मात्र होइन आनन्द र हर्षका उल्लासमय क्षणहरू पनि त्यसैले कविको काव्य सिर्जनामा छर्लङ्ग प्रतिविम्बित हुन्छन्।

हाम्रो मुलुकको पछचौटेपन, अशिक्षा र गरीवीका कारणले उचित अवसर र रोजगारीको अभावमा देश-विदेशमा नेपाली युवाहरूले भौंतारिन पर्ने बाध्यता कटुसत्यको रूपमा हाम्रो सामुमा छ। रोजगारीका खोजीमा भौंतारिँदा भारतमा मात्र होइन ब्रिटिस गोर्खा सेनामा भर्ती भएर पहिले हङकङ, मलायामा गएकै झैं आज पनि सिङ्गापुर, ब्रुनाई र इङ्ल्याण्डमा हाम्रा युवाहरू गइरहेका छन्। रोजगारीका लागि यसरी विदेशीने काम रमाइलो र शौखका लागि निश्चय पनि होइन तर बाध्यता हो। अन्य मुलुकको विकास, राम्रो जीवन र रङ्गीचङ्गीले कहाँ मन समातेर राख्न सक्छ र ? स्वदेश भनेको स्वदेश नै हो। प्रसिद्ध नाटककार बालकृष्ण समको प्रसिद्ध उक्ति छ "देशभक्ति मर्दैन चुत्थै देश भए पनि "। देशको माया देशप्रति भक्ति जहाँ गए पनि उत्तिकै हुने हो। जसरी परदेशी जीवनको रमाइलो भित्र घर, परिवार र आफ्नो मायालुको सम्झना टड्कालो भईरहन्छ। टाडा हुनुको वियोगको यो पीडाबोधले कलात्मक अभिव्यक्ति शब्दहरूमा पाउँदा सुन्दर काव्यको सृजना हुन्छ।

प्रस्तुत काव्यकृति 'परदेशीका कोसेली कविताहरू' का स्रष्टा विश्वासदीप तिगेला लिम्बू पनि कलिलो कल्कलाउँदो उमेरमै ब्रिटिस् गोर्खा सेनामा भर्ती भएर आफ्नो मातृभूमि, समाज, परिवार र मायालुको सान्निध्यदेखि टाढा जान पुगेका युवा हुन्।

विदेशमा छँदा उनले भोगेको वियोगको पीडा तथा परिवार र आफ्नो देशप्रतिको उनको प्रेमको वेगले बगेको भावनाका भेल काव्यात्मक रस भएर सुन्दर र कलात्मकरूपमा बगेर हामीलाई समेत डुवाउन उर्लेको छ यो काव्य संग्रहका रूपमा। सबै पाठकले यो अनुभूति तीब्रता पूर्वक खप्ने नै छन्।

युवा कविको यो प्रयास परपर्दो प्रयास छ भन्ने कुरामा म विश्वस्त छु। एकाध कवितालाई अपवाद ठान्ने हो भने कविको भाषा परिमार्जित छ र अभिव्यक्ति प्रौढ। आफ्ना कविताहरू संग्रहका रूपमा निकाल्न लाग्दा कविताहरूको छनौटमा होशियारी आफैं पुऱ्याएको भए झनै राम्रो हुने थियो। हामी आशा गरौं कि उनका आगामी संग्रहहरूमा भाषामा विध्यमान व्याकरणिक कमजोरीहरू हटेर अझ स्तरीय कलात्मक र प्रौढ अभिव्यक्ति पाठकले पाउनेछन्। सबैसँग मेरो पनि शुभकामना छ।

( बैरागी काइँला )
सदस्य
नेपाल राजकीय प्रज्ञा-प्रतिष्ठान।

# नयाँ पालुवा

भनिन्छ, जो देशभित्रै देश विहीन हुन्छन् अर्थात् जसले देशभित्रै देश हराउँछ, उसलाई देशको माया लाग्छ । अझै जो बाध्यताले देशबाट विदेशीन बाध्य हुन्छन् उसका लागि देशको माया झन प्रगाढ बन्दछ । उसले सैर गरेको देश स्वर्ग भन्दा प्यारो लाग्छ । भनिन्छ, जुन सन्तानले आमाको न्यानो काख र मातृत्वबाट अलग्गीनु पर्छ उसलाई मात्रै थाहा हुन्छ, आमाको अभाव भनेको के हो ? भनेर । अँ, साँच्चै भन्नु पर्दा यस्तै भावनाहरूले अभिप्रेरित कविताका संगालो हो "परदेशीका कोसेली" कविताहरू देशप्रतिको प्रगाढ माया, आमाको न्यानो काख र मातृत्वको अभावमा छट्पटीएका पीडाका अनुभूतिहरू हुन झैं लाग्छ विश्वास द्वीप तिगेला लिम्बूका कविताहरू ।

साँच्चै नढाँटि भन्नु पर्दा, म कविता लगायत साहित्यको शुभचिन्तक हुँ, तर यति नै पर्याप्त छैन । आज म जस्ताले कविताका बारेमा लेख्न पर्दा कविताका मर्मलाई न्याय गर्न नसकुँला कि भन्ने भय छ मलाई । कारण कवित्वबाट बेपत्ता कविताको कान्छो भाई हुँ म । आफू भन्दा श्रद्धेय कविताको मेरो स्तुतिले अपमान नहोस् भन्ने विचार राखेर मेरो स्वविवेकले भ्याएसम्मको ज्यादै सारंशमा लेख्दै छु ।

हजुर, कविता देशको माटोमा फूलेको राम्रो । कविता देशको घाम पानी हुरी बतासमा झुलेको राम्रो । कवितामा माटोको स्वस्ति फूलेको राम्रो । कवितामा आत्मा गौरव र स्वाभिमानताको सौरभ फूलेको राम्रो । तर बाध्यता, फूलको बिरूवाले देशको माटो नपाए पनि परदेशको आगनबाटै भए पनि स्वदेशको सुगन्ध र माटोको स्वस्ति बोकेर फूलेको एउटा फूल हो "परदेशीका कोशेली कविताहरू" ।

यस संग्रहभित्र कविको आफ्नो देशप्रतिको प्रगाढ प्रेम भेटिन्छन्, आमाको माया र मातृत्वबाट वञ्चित कविका भावनाहरू रोएका भेटिन्छन् । अमर, वीर गाथाहरूले स्वाभिमानता अकाशिएको पाईन्छन् र कहिले काही आफ्नी प्रियसीलाई सम्झीन पुग्दा पीरतिका दु:खेसाहरू पनि पोख्छन् त कँही-कँही प्रतीक्षामा उकुस-मुकुस छट्पटी र वैशका कुत्कुती पनि पोख्न भुल्दैनन् । जीवनका सुस्केराहरू भेटिने कविजीले छोटो उमेरमा धेरै आरोह-अवरोह पार गरेको अनुभव गर्न सकिन्छ ।

अन्तमा, कविताको समीक्षाको बारेमा कविताविज्ञहरूलाई सुम्पेर मैले सानो कुरा बोल्नु पर्दा, अरू नवप्रतिभाहरू झैं साना तीना कमी-कमजोरीहरूबाट कवि विश्वासजी पनि अछुत् रहनु भएको छैन । त्यसलाई छाडी समग्रमा हेर्ने हो भने, हुने बिरूवाको चिल्लो पात भने झैं साधनामा लागि परे भविश्यमा कविताको फाँटमा नयाँ आयाम थप्न सक्ने नयाँ पल्लव मान्न सकिन्छ कवि विश्वास दीप तिगेला लिम्बूलाई धन्यवाद !

–रक्ष राई

अल्डरसट, बेलायत

# धन्यवाद

पूर्वबाट उदाएका लालिम्य किरण झैं जहाज क्रमश विस्तारै दुवई, जर्मन हुँदै पश्चिमी बेलायतको लण्डनमा रोकिन्छ । गाउँ घर परिवार छोडेर हिडेको म, स्वदेश छोडेर हिडेको म । अतृप्त मनोकांक्षा सैद्धान्तिक मान्यता र व्यवहारिक भिन्नता अस्वाभाविक होइनन् । समाज, वातावरण, परिस्थिति, बाध्यता र विवशता अत्यन्तै प्रभावशाली हुन्छ । जब कि जो कोही प्रभावबाट वञ्चित रहन सक्तैन । सच्चा अन्तर आत्माहरू कोमल हुन्छन् । कोमल आत्माबाट भावनाहरू जन्मन्छन् । भावनात्मक साहित्य दुःखमा जन्मन्छ, सुखमा जन्मन्छ, स्वदेशमा जन्मन्छ टाढा धेरै टाढा परदेशमा पनि जन्मन्छन् । यिनै सन्दर्भको एउटा प्रमाण स्वरूप प्रस्तुत छ परदेशीका कोसेली कविताहरू ।

यस कोसेली कविता संग्रहको यो रूप हुनुमा वरिष्ठ पत्रकार–विश्वराज किरात, प्राज्ञ–वैरागी काँइला, साहित्यकार द्रय रक्ष राई, नवराज वर्तमान, वरिष्ठ नाटककार–हरीराज खेवा तिगेला, कला डिजाइनर–टेकवीर मुखिया, उपन्यासकार–मुलिवीर राई, कम्प्युटर डिजाइनर–दइन्द्र कुमार राई, केदार सुनुवार, ईश्वर चाम्लिङ, सुरेन्द्र इङ्नाम, लोकेन्द्र तिगेला, श्रीमती भोज कुमारी थोक्लेन र यस कोसेलीलाई प्रकाशन गरी दिनु हुने पारुहाङ- सुम्निमा युनेस्को क्लव, ज्ञानेश्वर प्रति हार्दिक धन्यवाद एवं आभार टक्र्याउन चाहन्छु ।

अन्तमा, यस मेरो पहिलो प्रायसमा धेरै गल्ति कमि कमजोरीहरू हुन सक्छन्, विज्ञ पाठक वर्गहरू र अभिभावकज्यूहरूबाट स्वस्थ सल्लाह एवं सुझावलाई आशा राख्दछु ।

जय परदेश ।

–विश्वास दीप तिगेला लिम्बू
हात्तिखर्क–२ सुन्तले
धनकुटा, नेपाल
हाल-ब्रुनाई

# विषयसूचि





# म के लेखूँ

म के लेखूँ
केहीबेर कलम अलमल्ल पर्छ
मनमा तरङ्ग जन्मन्छ
अब कलम मौन गुनगुनाहटबाट शुरु गर्छ
गीत लेखूँ गीतकार होइन
कथा लेखूँ कथाकार होइन
आखिर परदेशीको पत्र लेखूँ
अरु मनलाई दुखाउ किन दुःख बिसाई
ठोक्किदै जाने भावहरू
टाढाटाढा पुग्छन् चित्कार बोकेर ।

मानिसले जन्माएको साहित्य
साहित्यले जन्माएको व्यक्तित्व
आपसमा अर्न्तनिहीत सम्बन्ध हुन्छ
त्रिकालदर्शी दार्शनिकहरू
सधैं नयाँ सिद्धान्तमा लागिपर्छन्
विश्वलाई फूटाउने
आध्यात्मिकवाद र भौतिकवाद
तर्क वितर्कबाट

कहीले आध्यात्मिकवाद
कहीले भौतिकवादलाई
साहित्य प्रेमी कलम
कलम प्रेमी साहित्यले
यथार्थ मर्म बचाएको हुन्छ
साहित्यको सुन्दरतालाई राखेको हुन्छ ।

साहित्य भौतारिन्दै
गुणात्मक अलवा संख्यात्मक
अबधारणाबाट आश्रित बन्छ
साँचो हो
अनन्त क्षेत्र र ठाउँमा रमाउन पुग्छ
सारङ्गीको धुन मादलुको भाका
वैशालु यौवन आकर्षण सुन्दरता
मिलन विछोड
अतीत वर्तमान र भविष्य
सुख दुःख, पीडा, वेदना
स्वदेश विदेश
स्वाधीन पराधीन
हरेक परिस्थितिमा
साहित्य जन्मन्छ
संगीत हुर्कन्छ
कथा बन्छ
वास्तवमा इतिहास निर्माण हुन्छ
सबैको प्रतिनिधित्व गर्ने साहित्य
अमर छ अजम्मरी हुन्छ ।

कसैले उमेरको अडकल गर्न सक्दैन
शेक्सपियरको साहित्यबाट
अन्य नयाँ साहित्यकारहरूबाट
प्रेरित नयाँ साहित्य पुस्ता
आधुनिकतालाई काखी च्यापेर
उकालीओराली लागेका साहित्य
दोबाटोको दोसाधमा
अल्मलिएको छ
कतै बिराए हराएजस्तो

अब म के लेखूँ
अनुत्तरीत प्रश्नलाई रोकेर
आफ्नो विवशता तर्फ लाग्छु
कहीले खुशीमा हुन्छु
कहीले दुःखमा विह्वल बन्छु
दुःख नबिसाउँ सह्य छैन
म दुःखी छु ।

खोइ के गर्नें ?
न त चाहेर पाउन सक्छु
न त गुमाएर
विडम्बना !
रमाउछ मन पनि
चन्द्र उदाई दिए
सुन्दर बन्छ जीवनहरू
साथ तिम्रो पाए
तर, तिमी कहीले उदाई नै दिन्छौ
न त साथ नै दिन सक्छौ
यसर्थ हाम्रो कथा
खोई म के लेखूँ ।

 

# आशिष

नदिनुहोस् आमा
आशिष मलाई
छोरा परदेशी हुनु भनेर
जादिन आमा
विदेश रोजी
स्वदेशलाई छोडेर
बिन्ती छ आमा
दिनुहोस् आशिष
छोरा स्वाधिन हुनु भनेर
किनकि आमा
हाम्रो इतिहास
पहिचान
अस्मिता
आफ्नो प्रतिष्ठा र सम्मान
पराजीत पराधीन

भोलि समयलाई दिनु छ
भावी पुस्तालाई सुम्पनु छ
त्यसैले मसंग नैतिकता छ
मसंग निहित कर्तव्यहरू छन्
मलाई स्वदेशको यथार्थसंग
जुनसुकै बेला रमाउन मन पर्छ
आफ्नै मातृभूमिमा खेल्ने बानी छ
मलाई जन्मभूमिको सुन्दर मुहार
अरु सामु देखाउने अभिलाषा छ
मेरो आफ्नै रहर छ
मसंग बेग्लै जाँगर र जोस छ
मसंग आत्मविश्वास
साहस र वास्तविकता छ
विन्ती छ, मेरो
यो देशलाई बनाउन
बिन्ती छ, मेरो
नेपाललाई चिनाउन
आशा विश्वास गरी अपील छ
राष्ट्रचिन्तक, विवेकशील सबैमा
मेरो श्रद्धा र सम्झना छ
आमा मातृभूमि दुवैमा
मसंग स्वाभिमान र गौरव छ
सुन्दर विशाल नेपालमा ।

- यू. के.

# पाएको उपहार

सपना केवल सुन्दर रहेछ
विपनाको अनुभूति भन्दा
कल्पना नै मीठो रहेछ
देखिएको सपना भन्दा
सम्झना नै अमर रहेछ
पाएको उपहार भन्दा।

जीवन एउटा गोरेटो रहेछ
हिडेर कहिल्यै नसकिने
सम्झना एउटा सागर रहेछ
पौडेर पनि तर्न नसकिने
जीवन एउटा बलेको दियो रहेछ
कुनै बेला निभ्न सक्ने
मिलन एउटा गलाको धागो रहेछ
कुनै बेला चुडिन सक्ने ।

# ब्यूँझन्छु झस्केर

फूलेको फूल रोएको दिल, को भन्न सक्छ र
दुःखेको आत्मा झरेको आँसु,को रोक्न सक्छ र
मनको कुरा लुकाई राख्न ,कतिन्जेल सक्छु र
कति छौ टाढा मनको कुरा कहाँ भन्न सक्छु र ।
नबोले मन रोएर झन, बस्न कहाँ सक्छु र
म एक्ली बस्दै प्रतीक्षा गर्दै कतिन्जेल बसूँ र
यो सिङ्गो ज्यान हजुरको माया दिनु भो सिन्दूर
लाएको पोते सुहाएको गला कहाँ, छोड्न मिल्छ र ।

कसम खाए नैतिकता लिए यो सुन्दर संसार
हजुरलाई खोज्दै अध्यारो चिर्दै ब्यूँझन्छु झस्केर
रोजेको सपना खोजेको विपना पाउनु कहाँ, सक्थेंर
बर्षौ बित्यो आउनु भएन छिट्टै आउँछु भनेर
फर्कनुहोस् चाँडै गाउँघरमा अब पर्खी बसेछु रोएर
चाडपर्व आयो रमाईलो सारा आउनु भएन फर्केर
खुशीको दिन हाँसोको क्षण बिर्सन कहाँ मिल्छ र
परदेशी सबै बिर्सेर घर बसेको कहाँछ र ।
धेरै छौ सिमागत टाढा नजिकै लाग्छ चन्द्रमा हेरेर
तापेको घाम झन मीठो लाग्छ घाम एउटै सम्झेर
टेकेको पाइला देखेको सपना झन सुन्दर हेरेर
जल्दै जान्छ आशाको दियो विश्वास दिलाएर ।

अतीत मीठो भविष्य सुन्दर आँखामा राखेर
दिएको माया पाएको माया मुटुमा बोकेर
अपार माया पाएको झन खुशी छु हाँसेर
फर्कनुहोस् चाँडै गाउँघरमा अब बसेकी छु पर्खेर । ❐❐

# म एउटी नारी

म एउटी नारी
म जीवनदेखि विरक्तिएकी छु
सुनेकी छु
पुरुषहरूले बफादार, निश्चल पत्नी चाहन्छन्
म आफूलाई बफादार बनाउने कोशिश गरौंली
तर,
पुरुषले चाहे जस्ती बन्न नसकौंली ।

जब समयले अनुभूति पस्कदै गयो
आज मलाई हेर्न केटा आउने दिन
यो दिन प्रायः नारीहरूको उमङ्गको क्षण भएर
आउने गर्छ,
खुशीको रहर लिएर आउने गर्छ
आज मन एक तमासले सोच मग्न छ
एउटा सम्पूर्ण युग झैं लाग्ने

निष्ठुरी विगतदेखि वितृष्णा छ मलाई
जुन बेला यौवन उन्मादले
कुनै बेला एकान्तलाई रोजी दिन्थें
कहीले साथी संग हुन्थें ।

समय बित्दै गयो
धेरै साथीहरू मध्ये एक दिन
अन्यासै एक पुरुष साथीसँग आँखा जुध्यो
जिन्दगी के हो मलाई थाहा थिएन
बिस्तारै ऊ मेरो मनले चाहेको
म उसको मनले जितेको घनिष्ठ मित्र बन्न पुगें
म उसलाई पूर्ण विश्वास गर्थें
त्यसैले मनमा घाउ लागे पनि दुःखानुभूति थिएन
मनमा एक प्रकार रोमान्चकता थियो
उमेर थियो उमङ्गको
जोसको, जाँगरको
एक दिन घुम्न जाने प्रस्ताव आयो
मैले नकार्न सकिन उसको इच्छालाई
पुरुषहरू स्वयं सही हुदैन भने
नारीलाई मात्र खोज्नु मूर्खता हो
ऊ पुरुष स्वयं भन्दै थियो
भावनाको गहिराईमा डुबी सकेकी
सोझी व्यवहारकी म नारी
मैले उसको मन दुःखाउन चाहिन
तर,
आफ्नै... मनमा घाउ लागेको पत्तै पाइन ।

# देशलाई बचाऔं

भन्छन् कोही
जहाँ धर्म त्यहाँ विजय
धर्मशास्त्र यही भन्छ
भन्छन् कोही व्यर्थ बाँच्नु भन्दा वीर भएर
मर्नु असल
शहीद श्रीजङ्गले भन्नु हुन्थ्यो
भन्छन् कोही अन्याय गर्नु पाप हो
अन्याय सहनु झन् ठूलो पाप हो ।
.गीताले यही भन्छ

भन्छन् कोही
समय र परिश्रम दुवै
सर्वोत्तम चिकित्सक हुन
महान रुसोले यही बताउनु भएको छ
भन्छन् कोही
एकान्त नै सबै भन्दा योग्य साथी हो

यहाँ थोरो ज्यू त्यही भन्नु हुन्छ
भन्छन् कोही प्रेममा मानिस अन्धो हुन्छ
साहित्यकार शेक्सपियर यही भन्नु हुन्छ ।
भन्छन् कोही
चिन्तन बिनाको शैक्षिक योग्यता
केवल मागी खाने भाँडो हो ।

देखिन्छ त्यही,
चिन्तनले मानिसलाई महान बनाउंछ
हजुर महान व्यक्ति कहाँ नपढी भएका छन् र ?
महान व्यक्ति सबै पढेर मात्र पनि कहाँ भएका छन् र ?
कुनै सिद्धान्त भन्छ
जाति फुटाउ शासन गर
यथार्थले पनि त्यही दर्शाउछ ।

हो, हजुर !
बालक कविताले आफ्नो पीडा लेख्छ
हुर्केको कविताले अर्काको मर्म समेट्छ
राजनीति योद्धा जो भन्नु हुन्छ
देशको बारे द्विबिधा भए निर्णय लिनु पर्दा
आफू छेउको एकमुट्टि माटो हातमा लिनू
चिथ्रो फाटेको कपडा लाउने
गरीब किसानलाई सोध्नु
शहीदहरूलाई सम्फनु
उत्तर जे आउछ त्यही गर्नू
यो एउटा सुन्दर मार्मिक भनाई हो ।

व्यवहारमा कहाँ हुन सक्छ
यहाँ त यस्तै हुन्छ
स्वीजरल्याण्डका जीनज्याक रुसो चिच्याउनु हुन्छ
राज्य शक्तिको श्रोत जनता हो
मानिस स्वतन्त्र अवस्थामा जन्मन्छ

विस्तारै विभिन्न बन्धनमा जकडिन पुग्छ
यदि, रुसो साँचो भए ।
अट्ठाईस राजतन्त्रात्मक किन मौन छ ?
सत्य र साँचोले मन जित्ने भए
अमेरिका आफै साम्राज्यवादी हुँ किन भन्दैन
राष्ट्र र राष्ट्रियताको अस्मिता प्यारो भए
सिक्किमको आत्मा किन रोएको छ
सायद, सिक्किमलाई झैं सम्झेर
आफू खुशी बाघलाई दुहुन भारत किन चाहन्छ ?
लेख्छन् कोही
राजनीति र कुटनीति नियन्त्रण भन्दा बाहिर छ
भूमिहीन यासेर अराफात र मेनपोट
अन्तर्राष्ट्रिय मान्यताको आधारमा
शासक बनिरहेको प्रमाण छ ।

यस देशमा
मानव हीत विपरीतका
धर्मभक्त अन्धो कानून बाँच्छ
यत्रतत्र विवशीत मानव क्रन्दन सुनिन्छ
वैज्ञानिक डार्बिन भन्नु हुन्छ
इकोसिस्टम सिद्धान्तमा
सेकेण्ड र मिनट आपसमा परिपूरक हुन्छ
तर, भौतिकवाद र आध्यात्मिकवाद
दुईमा एकले पराजय किन स्वीकार्दैन ?
कार्लमाक्स टुक्रा-टुक्रा सिद्धान्त जोड्दै
भौतिक द्वन्द्वात्मक भन्नु हुन्छ
हो, अस्तित्वको लागि संघर्ष चलेकै छ
साँढेको जुधाइमा बाच्छा अलपत्र छ
त्यसैले प्रत्येक अबसरमा
समान मौका दिने सिद्धान्त कार्यक्रम आऊ
स्वाभिमान नेपाललाई जोगाऔं
स्वाधीन देशलाई बचाऔं । ❊❊❊

## गौरवको लागि

सायद नयाँ भएर
कसै-कसैको साक्षात् देवता छन् भनेर
सुनेको थिएँ
अब त स्पष्ट भयो
खुशीयालीको आगमन
शुभकामना कार्ड लिएर
कसै-कसैको कोठाभरि
आएको देखियो
अनि खुशीयालीको हर्षोल्लासहरू
फूलगुच्छाका माला बनेर
कसै-कसैको गलामा
भव्यताको साथ आएको पनि देखियो ।

स्याबासी छ,
शुभकामना कार्डले र चाडपर्वलाई
पाउनेलाई भन्दा दिलाउनेलाई

यसरी नै अनन्य द्वीपहरू जलोस
खडेरीमा पनि वर्षात् हुन सकोस्
धन्य छ ती कसैका देवताहरूलाई
किनभने, उसले ठूलो फाइदा र इज्जत कमाएको छ
अरूलाई पनि दिलाएको छ
अझ फाइदा, इज्जतको आशमा
जन्जीर प्रतिष्ठा बचाउने साहस गरेको छ ।

गरुन् उसले आशा र साहस
हामी उनको साहसलाइ सम्मान गर्नेछौं
तर हामीलाई देशको पृष्टभूमि बोक्ने
बफादारिताको इतिहास चाहिन्छ
अबका परिवर्तनहरूसंग
बिचरा छिछि, घृणा र दयाको
इज्जत होइन
सम्मानित स्वाधीनता
इज्जत र सम्मान चाहिन्छ
समयानुकूल अस्तित्व र गौरवको लागि
अबको पुस्ता कम्मर कस्नेछ
बफादारिता सम्मानका लागि
इतिहासको पानाहरूबाट
सप्तरङ्गीत मुहार बोकी
दृढ विश्वासको साथ लड्ने छ ।

११-१०-१९९७
दशमीको दिन, ब्रुनाई

# देश / आमा

जान्छु आमा, त्यो युद्ध भूमिमा
म स्वाधीनताकोलागि, लड्छु
कुर्लन्छु आमा, युद्ध मैदानमा
दुश्मन माथि, विजय लिइ छाड्छु ।

बाँच्नेछु आमा, रणभूमिमा
गोर्खालीपनलाई सँधै अंगाल्छु
नगर्नुहोस आमा, त्यो पीर छोरामा
लड्छु युद्ध, देश सुरक्षा म गर्छु ।

दिनुहोस् आमा, आशिष युद्धमा
आतुर-आतुर, सिमामा जानेछु
मर्ने त आमा, छैन रहर मनमा
तर देशको विश्वास, म पूरा गर्नेछु ।

साहरा आमा, बालकको तपाईमा
जनताको साहरा म युवा दिनेछु
किनकि आमा देशभक्त म नेपाली
कसम खाए नैतिकता पाए, वफादार बन्नेछु ।

देशलाई आमा बचाउछु संकटमा
वीरको सन्तान, इतिहास जोगाउछु
निश्चिन्त आमा, बस्नुहोस घरमा
विजय गरी फर्कनेछु प्यारो जन्मेको ठाउँमा ।



# आशा

आशै आशामा बाँचेको
मेरो यो जिन्दगी
केही होला कि भन्ने आशैआशामा
कहीले रोएको छ, कहीले हाँसेको छ
कल्पनाको सागरमा डुब्दै
अति सुन्दर आशाहरू हुर्किएका छन् ।

धेरै सपनाहरू देखेको छु
अनि, बाचाका पत्र लेखेको छु
आशाको लामो प्रतीक्षामा
कहीले हतासिएको छु
कहीले मुस्कुराएको छु
आशाको प्रकृतिमा
म विभोर बनेको छु
कहीले आफ्नै सम्फी विश्वास गर्छु
कतै आफूले आफैलाई सम्हाल्न पुग्छु ।

धत्, आशा कति धेरै साह्रै धेरै
एउटा आशाको विमुख पुग्छु
निराशा पछि अर्को आशा जन्मन्छ
गोडमेलबाट आशा हुर्कन्छ
यौवन आशा अनौपचारिकता पूरा गरेर
टाढा-टाढा धेरै टाढा गई दिन्छ
असह्य आशाका धोकाहरू
एक पछि अर्को थपिने नियति देख्छु ।

मैले देखेको छु, मैले भोगेको छु
तर, आशा किन यति लाचार छ
पटक-पटक हाजिर हुन्छु
सुकोमल सुन्दरता बोकेर आउँछ
यथार्थमा आशा नै मेरो आधार छ
आश नै मेरो जीवन छ
आश नै मेरो प्राण छ ।

आशै-आशामा दिनहरू बितेका छन्
मसँग धेरै पीडाहरू छन्
अनन्त चित्कारहरू छन्
मेरो विवशीत भावनाहरू
अफसोच,आशामा भुलेको छ
आशमा हाँस्दै, आशामा रमेको छ
मेरो श्रद्धा छ मेरो सम्मान छ ।
आश तिमी साँच्चै प्रकृति सुन्दरी छौ
तिमीलाई सबैको साथ छ
तिमीलाई बैशालु मात छ
झीनो-झीनो धेरै आशै-आशमा
मेरो यो जिन्दगी बाँचेको छ
उन्माद यौवनलाई साँचेको छ
आफ्नो भावी सुन्दर संसारलाई आँटेको छ ।

## विश्वास

म बांचेको धेरै
कुन्नि अझ कति बाँच्छु
विगतका क्षणहरू कति बिते
भविष्यका दिनहरू कसरी भित्रने छ।

विश्वास म संग रत्तिभर छैन
योजना बनाएर बाँच्न चाहन्छु
योजनाहरू भताभुङ्ग भएबाट
स्वयं आफैसंग मलाई विश्वास छैन ।

मसंग धेरै आत्म विश्वास छन्
मसंग धेरै आशा विश्वास छन्
साँचो विश्वास चाहि म संग छैन
भनिन्छ, संसारलाई विश्वासले थामेको छ
विश्वासले जगत्‌लाई धानेको छ
खोइ ! तर विश्वास चाहि
समय र परिस्थितिमा सीमित छ
त्यसैले,विश्वासको अभाव खड्किएको छ
जतातत्तै विश्वासको खाँचो छ

विश्वासलाई कहीले वितरण गरिन्छ
विश्वासलाई कहीले किनिन्छ ।
अन्तर सम्बन्धको बीचमा
विश्वासको अंकूरण टुसाउछ
फक्रने प्रीतिको फूलहरूबीच
सुशोभित सुवाससित हुन्छ
भरोसाबाट विश्वास लिनु परेको छ
व्यवहारबाट विश्वास लिदै
भावी रेखाङ्कन कोरेर
विश्वासका बाटोहरू खोज्नु छ
आशाको दियो जलाउनु छ ।

तर, अनविज्ञ विश्वास तिमी
साँचो बाचा तिमीलाई कहाँ पाउन सक्छु
तिमी त निष्ठुरी पनि छौ
कसैको बीच हराई दिएर
समस्याहरू भित्रचाई दिन सक्छौ
प्रीतिका डोरी चुडाली दिने गर्छौ
हुन त तिमी गम्भीर पनि छौ
जगत मै गहन जिम्मेवारी बोक्ने गर्छौं ।

त्यसैले, तिमीलाई खोज्नु धेरै छ
अनुत्तरित तिम्रो मुहारमा
लज्जालु मुस्कान हेर्न बाँकी छ
वास्तवमा तिमी विशाल छौ
महान र उद्धारक छौ
त्यसैले अनन्त विश्वास तिमी
सदा हाम्रो बीच आई देऊ
आपसमा विश्वासको माला गाँसी देऊ
हाम्रो सामु सधैं आई देऊ ।

# माया

भौतारि रहेको पाइला
एकान्तलाई रुचाउने स्वभाव
विस्तारै परिवर्तन हुन्छ
केही गुमाएका, हराएका जस्तो भावनाले
केही पाएको झैं लाग्छ ।

उदासी आत्माको चित्कार सुनेर
केही समभाव आवाज
सहमति र सच्चा हितलाई आतुरिएजस्तो
मायाको अस्तित्व बोकेर
लथालिङ्गको लफङ्गा जिन्दगीमा
केही आशा पलाएका छन्
निराशाहरू बिलाएका छन्
कसैको लागि खुशिको दिन भित्रिएर
अनविज्ञ यौवन तरङ्ग सुसाई दिएको छ
उसको निम्ति सपना र कल्पनाको
ज्यादै सुन्दर विशाल संसार बनेको छ ।
पलपल आशहरू विश्वास तर्फ मोडिएका छन्

तर, उसलाई थाहा छैन
ऊ धेरै दु:खी छ, धेरै ऊ खुशी छ
कति तड्पिएको छ जानेर
कति तड्पिएको छ नजानेर
माया प्रीतमा मानिस अन्धो हुन्छ
तर, ऊ कहाँ अन्धो भएको छ ?
सिर्फ त्यागी मात्र हो
किनकि ऊ प्रकृतिले मानिस हो
उसको मुटु छ ऊ संग माया छन्
तर, उसलाई थाहा छैन
उसको मुटुभित्र के छ
उसलाई स्वाभाविक भरोसा छ
निश्चय नै मानवीय स्वाभाव छ
पक्कै पनि मानवीय व्यवहार छ
त्यसैले उसको अन्तर हृदय रमाएको छ
सुन्दर मायाको प्रतीक्षामा बसेको छ ।



## पपी डे

कहीले भ्यालन डे
कहीले पपी डे
तर आज पपी डे
गरेको थियो देशको सुरक्षा
जो बफादार सिपाहीले
लडेको थियो सिमामा
उही देशभक्त नागरिकले ।

पराक्रम देखाई, पराधीन हराई
स्वतन्त्र बनायौं देशलाई
देशभक्त युद्धमा लड्दै
मेरो प्यारो देश भन्दै
दुश्मनको गोलीलाई थापेको थियो।

देश र देशवासी संकटमा पर्छ
पर्दैनन् शहीद
बाँचुन्जेल उसले देशलाई लड्यो

लड्दैन अर्कालाई
एघार महिना एघार गते एघार बजे
गैर सैनिक सैनिक मिलेर हामी
शहीदको सम्झना गर्दछौं ।

प्रेरणा श्रोत अग्रज शहीद
बाटो त्यही खोज्नु छ
संकट देशलाई आए
साथ त्यही रोज्नु छ
शिरैमा मेरो पपी फूल भिरी
क्या राम्रो सुहाएको
वर्षमा एक शहीदको नाममा
सम्झना गर्ने उत्सव आएको ।

★★★

# मेरो यात्रा

असीमित परिधिको यात्रामा
म मध्ये एशियाबाट
दक्षिण पूर्वी एशिया
जहाँ भू-मध्ये रेखीय क्षेत्र पुग्छु ।

कता-कता प्रचण्ड सूर्य तापले
अस्त व्यस्त बनाउँछ मलाई
कहीले सदाबहार घन अनकन्टार
जंगलबीच घुम्नु पाउँदा
अत्यन्तै खुशी लाग्छ मलाई
थाईल्याण्ड्को कृषि र सौन्दर्यता
सिंगापुरको व्यापार, पर्यटन
अग्लाअग्ला गगनचुम्बी भवनहरू
मलेशियाको उच्च शिखर माउण्ट किनावालु
खोलिएका छताछुल्ल खुल्लापन
ब्रुनाई जस्तो सानो शान्त सुन्दर सम्पन्न
भूपरिवेश र समाजिक यथार्थसंग

रमाउन पाउँदा खुशी लाग्छ मलाई ।
नरिवलको बोटले सुसज्जित श्रीलंका
सुख्खा-सुख्खा देखिने म्यानमार,
बहादुरीको इतिहास बोकेको भियतनाम
अनि पाखा पर्वतले जोडिएको इण्डोनेशिया
पटक-पटक घुम्न जाउँ लाग्छ मलाई
सूर्यको उदाईसंगै म बाटो लाग्छु
यूरोपियन क्षेत्र पुग्ने साहस लिएर
कहीले दुवई मरुभूमिलाई हेर्दै चिच्याउछु
कहीले गर्मी बहराइनमा
भक्क भूइँमा झरेको उड्ने पंक्षीलाई सम्झन्छु
तर त्यहाँको चौउन्न डिग्री तातो वातावरणबाट
अतालिदै जहाजभित्र पस्नु अघि
केही नेपालीसंग संयोग भेट गरेर
बहराइन डिनर किनी डिउटी फ्री घुम्न जान्छु ।

भविष्यमा झस्कन्छु म प्रश्न गर्छु म आफैलाई
कति धेरै मरुभूभि, कस्तो मरुभूमि ?
कति गर्मी, समुद्रको पानी समेत तातिने
लामो समय जहाज बाहिर रमित हेर्छु
क्षणिक रमाईलो पछि दिक्दार लाग्छ मरुभूमि हेरेर
सूर्य प्रभात संगैको यात्रामा पूर्वबाट पश्चिम जाने
अति उज्यालो घामको किरणहरूलाई पछ्याउदै
पूर्व एशियाबाट पश्चिम यूरोप तर्फ
म जहाजमा उडिरहेको हुन्छु
घडीले मध्येरातको संकेत गर्छ
तर मध्य दिन हो कि झैं सूर्य प्रकाशले साथ दिई रहन्छ
न त आकाश न त धर्ती शून्यता भित्र हराउदै
सेतो बादलले जमिनलाई ढाकेकोले अर्को आकाश देखिन्छ ।
माथि आकाश तल आकाश
अनि कता कता चिच्याउन मन लाग्छ

यही होकी माथिको स्वर्ग, यही हो कि आनन्द
जहाज कुनै बेला बादल भित्र हराउँछ
कहीले भूभाग छोड्दै. समुद्रमाथि उडिरहन्छ
धेरैबेर पछि चाहिं ट्याम्के डाँडा, घोप्टे भीरजस्तो
डाँडा, पखेराहरूलाई नाघ्दै केही समय इटाली माथि हुन्छ
उराठिंदो डाँडादेखि तल गहिरो भागमा
जमेको दोभान त्रिवेणी गडतीर क्षेत्रका
थुप्रै शहरहरू घुम्ती र नागवेली सडकहरूले
बेग्लै आ-आफ्नै चिनारी दर्शाइरहेको हुन्छ
केही समयको अन्तसंगै
गोधुली साँझमा रमाउने पेरिसको आइफल धरहरा
अन्य थुप्रै फ्रान्सका शहरहरू
सयपत्री फूलहरू ज्योतिले फूलेको देखिन्छ
कतै क्रिसमस फूल झैं धिपिक धिपिक बलिरहेको हुन्छ
फेरि थाँकी सकेको जहाज फ्रान्सलाई छिचोल्दै
अबतरणको लागि लण्डनलाई चक्कर लगाउन पुग्छ
ट्वाङ-ट्वाङ चेतावनीको घण्टीपछि अबतरण हुन्छ ।



# मातृभूमि नेपाल

म स्वाभिमानी आमा
म सृष्टिको अस्मिता
मलाई सबैले माया दिएर आदर गर्छन्
म खुशी छु, मलाई सँधै खुशी राख ।

म सगरमाथालाई जन्माउँछु
लाली गुराँसको सुन्दरतामा रमाउछु
म बिहानीको लालीसंग मुस्कुराउछु
म आफ्नो खुशीमा हाँसेको छु ।

मलाई तिम्रो माया चाहिन्छ
मलाई तिम्रो ईमान्दारिता देऊ
म तिमीलाई मौलिक पहिचान दिन्छु
तिमीलाई मेरो खुशी दिन्छु ।

तिम्रो उदास दिनहरू टाढा जानेछन्
तिम्रो प्रेम सफल बन्नेछन्
धैर्य गर तिमी
मेरो सुख तिमीलाई बाँड्नेछु ।

मैले अनुरोध गरेकी छु
तिमी अन्धोभक्त आन्दोलित नहौ
तिम्रो विशाल समस्या छ
मेरो पनि बेग्लै पीडा छ ।

तिमी मान्छेको हत्या नगर
उसको पनि जीवन छ
तिम्रैजस्तो उसलाई रहर छ
उसको पनि सुन्दर भावना छ ।

मेरो आफ्नै व्यथा छ
मलाई पनि चिन्ता छ तिम्रो
किनकि म तिम्रो प्यारो
मातृभूमि नेपाल आमा हुँ ।



## कुन्नि कसरी पर्खिन्छे

लामो प्रतीक्षाको फल मीठो हुन्छ
तर मलाई एकछिनको पर्खाइ वर्षौं झैं लाग्छ
वर्षौंको पर्खाइ युगौं झैं लाग्छ
साधारण मेरो दैनिक दिनचर्याहरूमा
चाँडै फर्कन्छु भनि छोडेर आउनु
मलाई कति नरमाईलो लाग्छ ।

मेरो बिदाइमा घर गाउँ समाज नै स्तब्ध बनि दिन्छ
रातभरि संगै निदाउने ओछ्यान
अनि बिहानीको मझेरीमा सुँकसुँक रुन्छ
कहीले दङग्याउछे
कहीले चिच्याउछे
कहीले हतासिन्दै भन्छे
म यहाँ एक्लै
रुन्चे स्वरको अतिरिक्त थोपा-थोपा आँसु
एक पछि अर्को गला छात्ती हेर्दै भुइँमा खस्छ

खाट् कड्केको आवाज शून्य पछि
रातभरि ओढेको सिरक आराम लिन खोज्छ
आजको बिदाईलाई चट-चट पट्टीन पुग्छ
तन्किएको सुकिलो ओछ्यान त्यही लडिरहन्छ
परदेशीको घडीले चेतावनी घण्टी दिन्छ
प्यारो ओछ्यानलाई सम्झने माया गर्ने
मीठो बाचा र आश्वासन दिदै चुम्बन गर्छ ।

म त परदेशी
तिमी यही यस्तै बस्नु है
गाउँघरको शोभा भएर
मलाई पनि छोडेर जान मन लाग्दैन
तर, मेरो मजबुरी , हाम्रो विवशता
ठीक आज कोठा छोडेको तीन वर्ष भयो
तर पात्रोमा तीन हप्ता मात्र भएको छ
बतासे म परदेशी
कहीले पूर्व कहीले पश्चिम
म चाहन्छु घर पुग्न सक्छु
तर, उनी चाहन्छिन् आउन सक्दिनन्
मलाई साहस छ, स्वतन्त्र छु
तर, उनी दरिद्र छिन् साहस र स्वतन्त्रताको
कड्कने खाट माथिको ओछ्यान
कोठाभित्र फोटोको सामुन्ने छ
दिन र रातमा गरी धेरै मलाई हेर्दै
एक्लो विवशताको खटपट खटपटमा निसासिन्छे
दिएको समयमा घर पुग्न म सक्दिन
उसलाई मनको बाघले खाई सकेको छ
त्यति विघ्न लामो पर्खेर
कुन्नि उनी कसरी बस्छे ।

❦❦❦

# कति हाँसु

कति हाँसु बाहिरी मात्र, भित्र हाँसु ठाउँ छैन
एकान्तमा रोइ बसें, सहारा दिने कोही हुन्न ।

टोलाउँछु क्षितिज पारि, मेरो केही आशा हुन्न
दोबाटोमा पर्खेर बसूँ, भविष्य नै केही छैन ।

आँसु कति बगाउँ मैले अब केही बाँकी छैन
जति सम्झ्यो घाउ दुख्छ, यो जुनीमा पीडा बन्छ ।

हिडौं बाटो कहाँ पुग्यो, अतीतमा यो मन दुख्यो
खुशी मेरो आँसु बन्यो, सपनाहरू उडी गयो ।



# एउटा इतिहास

पलाएका नयाँ पालुवाहरू
वसन्त पछि ग्रीष्म ऋतुमा हिडींरहेको हुन्छ
जवानीका भावनाहरू,
मीठा-मीठा आशा र कल्पनामा डुल्न थाल्छ
घुमफिरको चक्र क्रममा ऋतुहरू बिस्तारै
एक पछि अर्को भित्रन्छ,
सूक्ष्म-सूक्ष्म चाहनाहरूबाट
प्रत्येक दिनचर्या अथाह बनि दिन्छ
यौवनका मनोतरङ्गहरू बहकन्दै
कता कहीले चंचल मन आतुरिन थाल्छ ।

यात्राहरूको सुन्दर ठाउँहरू
उदाउने र अस्ताउने गर्छ
देखिने दृष्यहरू सपनादोष बनि
सुनसान रातमा घचघच्याउन आइपुग्छ
हुर्कदै गरेका सपना र आशाहरू
धेरै रमाईलो सुन्दर बन्ने गर्छ
शेक्सपियरले परिभाषित गरेको

अन्धो प्रेमको पाइलाहरूबाट
यावत कुरा बिर्सी दिने नियति भेटिन्छ
अगाडि बढेका पाईलाहरूलाई
वर्गीय विषमताले नै छेक्न सक्छ या भौगोलिक
अनेकौं समस्याको वावजुद
विजय गरेर अगाडि बढिरहेको हुन्छ ।

विजयी पाइलाहरू आखिर
पूर्वाधार पछि कार्यान्वयन तर्फ लाग्छ
सक्षम, कुसल, उज्वल भविष्य
निरन्तरता र स्थाहीत्वमा बाँधिन पुग्छ
यथार्थमा जीवन,
सुन्दर सुखमयमा रमाउने गर्छ
सुख्खा हेमन्त ऋतुमा
कतिपय पालुवा सुक्नु पर्छ
अभाव र संकटको बेला
अन्यासै हराउनु पर्छ
अस्पष्ट दोबाटोहरू
आफ्नो अस्मिता गुमाउन पुग्छ ।

अबस्थाहरू कुनै कहीले
ओभेल छायाँ भित्र पस्ने गर्छ
प्रकाशको कमि हुन गए
छायाँ सदालाई पछाडि पुग्छ
यदि प्रकाश छायाँलाई छिचोल्न पुगे
पर्दा खुलेको मंच माथि
स्वघोषित पात्रहरू
स्वर र संगीतको भाखामा
कला र कलाकारिता देखाउन सक्छन्
एक आपसमा रमाउन थाल्छन्
अन्तमा यसरी एउटा सुन्दर इतिहास निर्माण हुन्छ । ❀❀❀

# *कति प्रजातन्त्र ?*

*राष्ट्रियता धेरै महङ्गो*
*जो स्वतन्त्र नागरिकको निम्ति*
*यो देश कति प्यारो छ*
*ती महान शहीदहरूको लागि*
*यो प्रजातन्त्र कति अपरिहार्य हुन्छ*
*सच्चा देशभक्त नागरिकको निम्ति ।*

*रगत पसिनाको बलिदान कति अमर छ*
*देशका चिन्तशील पीढीको लागि*
*देश र जनतन्त्र कति तड्कारो हुन्छ*
*स्वाधीनकर्मी विवेकशील पक्षको निम्ति*
*महत्व र सम्मान कति प्रजातन्त्रको*
*दिवस तथा महोत्सवको लागि*
*नैतिकता र कर्तव्य कति हाम्रो*
*प्रजातन्त्र र स्थायित्वको निम्ति*
*प्रजातन्त्र शब्द कति गम्भीर छ ।*
*शहीदको रगतले कोरिएको प्रजातन्त्रको लागि*
*सहिष्णुता पनि कति आवश्यक हुन्छ*
*वास्तविक देशको ढुकढुकी बोक्नेको निम्ति*
*त्यसैले प्रजातन्त्र हामीलाई चाहिन्छ*
*सिङ्गो राष्ट्रको अस्मिता जोगाउनको लागि*
*म त नेपाली राष्ट्रियतामा बाँचेको छु*
*मलाई स्वतन्त्र नागरिक भनेर चिन्छन्*
*खुशी लाग्छ प्रजातन्त्र शिशुबाट हुर्कन्छ ।*

**18- 02-98** / ०५४-११-७
-प्रजातन्त्र दिवस, **BRUNEI**

# माया प्रीतिलाई

वसन्तले छोडी जान्छ टाढा-टाढा
अर्को वर्ष फेरि पनि आउने गरी
छोडेर जादैछु केही समय तिमीलाई
चोखो माया बोकी, मुटु भरी-भरी ।

विश्वास र सत्यतामा प्रतीक्षा गर
म टाढा क्षेत्रगत धेरै टाढा गए पनि
आशा र भरोसाबाट समाउने गर
केही दिन तिम्रो साथदेखि अन्तै रहेपनि ।

निश्वास छु कता-कता आउनु पर्दा छोडेर
फर्कनेछु एक दिन मीठो मिलनलाई सम्झेर
परदेशीको जीवन यात्रा उदासपूर्ण छ
जहाँ बलिदान र सघर्षलाई अगाल्नु पर्छ ।

यो जिन्दगी कति अनन्त अनमोल छ
हाम्रो आपसी माया प्रीतिलाई सजाउनु छ
क्षेत्रगत क्षणिक समयको बिछोड केही होइन
लामो प्रतीक्षा पछिको सफलता नै मिलन हो ।



## थाकी सकेको छु

परदेशमा तिम्रो पत्रको आशा गर्दा
म थाकी सकेको छु
धेरै पटक सम्झाएं तिमीलाई
प्रवासमा तिम्रो पत्र सहारा हुन्छ भनेर
अब त धेरै दिन बिति सक्यो
तिमीबाट आशाको पत्र कहील्यै आएन
मनका धेरै कुराहरू लेखेर पठाएं
पत्र जवाफ कहिल्यै फर्किएन
मनमा भनूँ-भनूँ लाग्ने कुराहरू धेरै छन्
तर अब कसरी लेखूँ आधार कुनै छैन ।

धेरै गन्थन गरें आखिर गल्ति के थियो
बाचा बन्धन भए पनि महत्व के हुने भयो
म यहाँ बिरामी परेको पनि हप्तादिन नाघ्यो
हिजोदेखि झन सिकिस्त भएको छु
सम्झन्छु यदि म परदेशी नभएको भए

घर परिवारको उपचार पाउने थिएँ
जति सिकिस्त हुदै गएको छु त्यति याद आउँछ
भर्खरै एउटा साथीले पनि दुर्घट्नामा परि
हामी सबैलाई रूवायो
छोराले घरमा बाबा सोध्दैछ भनेर
उसको आमाले बतायो
परदेशी ठाउँ अनौठो हुन्छ
तिम्रो यादमा यो मन झन रुन्छ ।

आज नै घर फर्की आउँ भने
बिरामी भा छु म हिड्न सक्दीन
गाउँघरको आरामी पत्र आशा गरूँ भने
हुलाकी दाइले मलाई पत्र कहील्यै बाँड्दैन
निष्ठुरी समयसंगको सम्झौता मानौ भने
किन-किन यो मन पटक्कै मान्दैन
हुर्के बढे पढे होला भाइ बहिनीले
जान्ने उत्सुकता कति धेरै छ मसंग
तर तिमीले पत्र कहील्यै लेखीनौ
प्रवासी भावनालाई कहील्यै बुझेनौ
ठीकै छ प्रवासीको भावना बुझेनौं
अहिले बुझ्न पनि सक्दिनौ ।

कुनै दिन मलाई पत्र लेख्नु
प्रवासीत छु मेरो अनुभव भनेर
खुशी लाग्छ कहीले
मानिसको निष्ठुरी गुण जानेर
आश र निराशबीच गुनगुनाउँदै हिड्छु
सुन्दरतामा घमण्डको फल लेख म हेर्छु
बतास झैं धन्य सत्यकथा दोहोऱ्याई पढ्छु
अनौठो यो जिन्दगी खै के जिन्दगी !
म थाकी सकेको छु ।

# त्यही आँसु

आखिर जिउनुको अर्थ
के हुन सक्छ ?
वास्तविकतालाई बिर्सीएर
अलग्गै आफ्नो बाटो लाग्नु छ
फेरि मर्नुको अर्थ
के हुन सक्छ ?

ऊ जिउँदै पहिले
मरिसकेको छ
गुमाउनुमा पीर किन
अन्ततोगत्वा,
पाउनु नै गुमाउनु हुन्छ
थोपा थोपा रोदनका आँसुलाई
महत्वहीन भन्नु किन ?

त्यही आँसु
कसैको लागि
अभिप्रेरक वस्तु हुन्छ
अथाह पीडा वेदना किन
बिछोडको पीडा
असफल व्यक्तिलाई प्रेरणा बन्छ ।

# पत्र, प्रिय तिमीलाई

प्रिय !

अशेष प्यार
अटुट सम्झना
स-कुसल रही तिमी प्रति
सोहीको आशा
गाउँघर छरछिमेक सबैलाई
मेरो आलो सम्झना ।

अरु,

मेरो खबरहरू त के लेखौं
वेलामा पढ्ने मौका भएन
चाहे जति पढ्न पनि सकिन
त्यसैले जहाँ गए पनि
अप्ठ्याराहरू आई पर्छन्
आजकाल त मलाई
कहीले विगतलाई सम्झदै
धिकार छ जिन्दगी भनि
गुनगुनाउन मन लाग्छ
कहीले शून्य आकाशको

चन्द्रमासँग बात मार्न मन लाग्छ
कहीले अन्धकार भित्र हराई
निस्सासिन मन लाग्छ
कहीले विगतलाई सम्झी
कसै सामु दुःख पोख्न मन लाग्छ ।

तर,
उराठ मरुभूमि संसारमा
दुःख सुनि दिने कोही हुन्न
कहीले मीठो भविश्यको कल्पना गरी
आत्मा विभोर बनि
खुशीका आँसुहरू
पुछ्न मन लाग्छ
कहीले बिछोडका पीडाहरूलाई चर्काइ
स्वयं आत्मा हत्या गर्न मन लाग्छ
कहीले फेरि वैशालु भएर
तिमी समक्ष प्रेमको प्रस्ताव लिएर
पुनः आउन मन लाग्छ
कहीले बालक बनि
आमाको कोखमा लुटपुटि खेलु लाग्छ
कहीले बिहानीको लालीम्य हिमाल बनि
चिसो सिर्सीरे बतास झैं
स्वच्छ प्रेमको निम्ति
सुस्केरा हाल्न मन लाग्छ
कहीले प्रत्येक दिन पत्र लेखी
आशा र भरोसा देखाई
तिमीलाई रिझाउन मन लाग्छ ।

अफसोच,
यो चाउरिने निधारको
कर्मरिखाहरू सीमित छन्
उनी कर्मकी माता दरिद्र छिन्
सबैलाई राम्रो कर्म दिन सक्दिनन्
जति आशाका प्रार्थनाहरू गर्छु
त्यति नै निराशाका पाठहरू

पलपल आउने गर्छ
कहीले हतोत्साही र निराशा बन्छु
आखिर भाग्य सबैलाई
कहाँ पुग्न सक्छ र ?

अन्ततोगत्वा,

निराशामा खुशी हुनु
शोभनीय हुने भएकोले
आन्तरिक भावनालाई छोपी
अन्यासै खुशी भिक्ने गर्छु
कहीले मनका चाहना र यातनाहरू
नोटकापीमा छताछुल्ल थन्क्याउने गर्छु
कहीले यौवनका
उक्कुस मुक्कुस रहर बोकी
आँसुमा पिउने गर्छु
कहीले साधारण जीवनसंग तुलना गर्दै
कहीं मुसु-मुसु हाँस्ने
कतै सुँक-सुँक रुने गर्छु
अनेक यस्तै क्रिया-प्रतिक्रिया हुँदा-हुँदै
फेरि तिमीलाई सम्भन पुग्छु
शून्यतामा तहस नहस चिच्याई
फेरि सुन्दर भविष्यको
मिलनसम्म आई पुग्छु
धेरै-धेरै मन खेल्दै

पुनः

निश्चल चंचल स्वच्छ पानीमा
सूर्यको नवकिरणसंग रमाई
एकाग्रता आउछ ।

अनि

जति तीव्र चाहना भए पनि
भविष्यलाई सुम्पी
चुपचाप बस्न मन लाग्छ ।

## नाटक मंचन

फूल, फूलेको त्यो फूल
जब फक्रिएर सुःवास्ना छर्छ
सुःवास्नाको आतुरले
यी प्रत्येक भावनाहरू
पलपल जुर्मुराउने गर्छ
सजीवन ती भावनाहरूमा
विभोर भई संसारलाई
बिर्सी दिने नियति हुन्छ ।

जवानीका सूक्ष्म कणहरू
क्षण-क्षणमा चाहना फेर्ने गर्छ
विगत र भविष्य टाढा हुन्छ
वर्तमान नै सर्वस्व बन्छ
बाल्यकाल र प्रौढकाल क्षितिज हो
युवावस्था नै संक्रमक हुन्छ
पाउनु नै गुमाउनु हुन्छ
गुमाउनु नै पाउनु
चाहेको पाएर रमाउन मिल्छ

पाएर संसार सजाउन सुहाउँछ
अन्यासै पाइलाहरू
अनभिज्ञ अन्जान बनि दिन्छ
सोचेको भन्दा टाढा गई दिन्छ ।

कल्पनाका सुन्दर संसारलाई
भताभुङ्ग नरमाइलोपनमा परिणत गर्छ
जन्मेको एक्लै बाँकी जीवन एक्लै
अधुरो प्रीतका नशा
अट्टहास र उपहासबीच
मद्यपान, धुम्रपानको सहारामा
रोएको आत्मा टोलाई रहन्छ
परेन जालमा माछा उम्कियो झन ठूलो
प्रकृति यस्तै मायालु गुनिलो
विश्वास थियो साक्षी दियो
क्षणभरमा नाटक मञ्चन भई दियो ।



# किन प्रवासीत छु ?

गर्नेछु, लड्नेछु भन्ने
दृढ भावना बोके पनि
आखिर कर्मको रेखाङ्कन क्षेत्रभित्र
उक्कुस मुक्कुस हुर्किएका
इच्छा, आकांक्षा अनि लक्ष्यहरू।
निसासिन्दो हुर्काउनु पर्ने
जिन्दगी यो जिन्दगी अनि
विवशता र परिस्थितिहरू।

कैयौं इन्कार कति स्वीकार भए पनि
जीवन चर्चाहरू स्वाभाविक रुपले
गुजार गर्नु पर्ने यो कस्तो जिन्दगी
त्यसैले त मलाई लाग्छ
म बाँचु कसरी बाँचु
म हाँसु, कसरी हाँसु
श्राप अनि अभिशापको
जिन्दगी अनि यो जिन्दगी।
फरक कति फरक मानिसहरूबीच
जहाँ एउटै आधार र अधिकार
एउटै समाज र समस्या भए पनि।

निर्देशित आ-आफ्नो बाटो अंगाल्नु पर्दा
साच्चै नै यस्तो लाग्छ मलाई
म माथि भाग्यको कठोरता र निर्दयीता हो
किनभने, म एक युवा हुँ
म एउटा कर्णधार शक्ति हुँ
तर किन प्रवासीत छु ?
यसरी किन विवशीत छु ?



# वैशालु यो कस्तो

वैशालु यी मेरा भावनाहरू
कुनै बेला रित्तिएको हुन्छ
वैशालु यी मेरा वैंशहरू
कुनै वेला फक्रिएर ढकमक्क फूलेको हुन्छ
वैंशालु यी मेरा जवानीहरू
कुनै क्षण कमल झैं सुवासित हुन्छ
वैशालु यी मेरा सुन्दरताहरू
कंहीले कहि लालिम्य हिमाल झैं सौन्दर्यत बन्छ
वैशालु यी मेरा चंचलताहरू
सधै-सधै बतास झैं अधिर रहन्छ
वैशालु यी आवश्यकता र समस्याहरू
ज्यादै विशाल विह्वल भयानक बन्दछ
वैशालु यी मेरा अङ्ग, प्रत्यङ्गहरू
झन अति सुन्दरतामा रमेको हुन्छ
वैशालु यी मेरा चाहनाहरू
परिवर्तनका लागि सेकेण्ड-सेकेण्डमा आतुरिन्छ
वैशालु ही मेरा उमेरहरू

कुनै भरोसाहीन, अलौकिक ठहरिन्छ ।
वैशालु यी मेरा लक्ष्यहरू
फेरिन्छ क्षण-क्षणमा यसरी
जब शिक्षक भेट्छु
शिक्षक बन्न मन लाग्छ
जहाँ डाक्टर देख्छु
बिरामीको सेवा गर्न मन लाग्छ
कहीले पाइलट देख्छु
आकाशमा पाइलट बनेर उड्न मन लाग्छ
धेरै विज्ञान र प्रविधिको विकास पाउँछु
विज्ञान बनि सीप बढाउ जस्तो लाग्छ
अन्यासै संगीतले मन जित्छ
अन्तर्राष्ट्रिय भाषा संगीत बनि
संगीत गायनको माध्यममा सुसाई रहुँ लाग्छ
कसैले साहित्य विद्याबाट मन पगाल्छ
कवि बनेर मर्महरू कोरूँ झैं लाग्छ ।
कहीले राजनेताहरूको चरित्र पढ्छु
नेतृत्ववादी भई उदाउँ झैं लाग्छ
यदाकदा अभिनेत्रीहरूको भीड भेट्दा
अभिनेता बनि भीड थपी दिउँ लाग्छ ।

खोई वैशालु यो कस्तो-कस्तो
केही पाए पनि नपाए जस्तो
केही पाए पनि हराए जस्तो
देखे जति छायाँ जस्तो
भेटेपछि माया जस्तो
विछोड पछिको मिलन जस्तो
यो वैशालु कस्तो-कस्तो
वैशालु यो जवानीमा
रक्सीले झैं माते जस्तो ।



# गोरुको पीडा

जन्माएथ्यो आमाले
खाएथें दूध, हुर्कायो आमाले
हुर्कदै आए स्याहाऱ्यो किसानले
बिहान, बेलुकी घाँस र पानी
किसानले दिलाएथ्यो
म हुर्किए पछि किसानले दाएथ्यो ।

वैंशको थिएँ, बन्धनमा थिएँ
उम्कन सकिन केही गरी
घाँस र पानी दिई रहन्छ मलाई
सधैं तान्छु हलो म जसरी
निमुखा मलाई पिटेको पीडा
बिर्सन्न केही गरी
सकेको बोझ तानेर बस्छु
स्वर्ग झैं त्यो मेरो गोठैम

चिन्दछु धनी उही हो भनि
घाँस पानी गर्नेलाई
बिहान पख दिन्छन् घाँस

तान्छु हलो चाहिं दिनभरि
चलन पशुलाई यस्तै
हलिको हलो, सबैलाई छ, भलो
म हल, गोरुको जुनी
आउदैन बोली कसरी बताउनि
दुःखेको पीडा चर्केको घाउ
कहाँ कहीले मलहम लाउ ।

लाग्दैछु मेलो, तान्दैछु हलो
दुःख बताउँ कहाँ, कसरी ?
जुनी छ यस्तो, चलन कस्तो
सस्तो मोलमा बेच्ने मलाई
जान्छु म त्यही, नयाँ ठाउँ मलाई
पठाउछन् मलाई, जान्छु जुध्नलाई
सबैले भन्छन् पशु होस् मलाई
बेचेर मलाई,लिन्छन् नाफा चाहि झन धेरै
घाँस पाएँ, बास पाएँ माया चाहि पाइन
के गरु मैले सोधेर आएँ देशलाई
छदैछ हलो, योग्य छु जोत्नलाई
पाएको जुनी, कर्तव्य मुनि
बसेको म गोरु ।

पाएको दुःख सुनाउ म कसोरी
तनाउन हलो घस्याउँछ बेस्सरी
तान्दैछु हलो, पिट्छन् मलाई
दुख्दैन हलीलाई
के मूर्ख भनौं जुध्न आउने गोरूलाई
अब गौरव गर्छु, दुःखिया जुनीलाई
मागेको बरदान पाएको बरदान
सामुन्ने किसानलाई
अब भाँचिने हलो भावीको निशानलाई
खुब गरे दुःख हलसँग मिलेर
बेचिन्न अब कसैले किनेर
म गोरू मै साँढे
म साँढे मै गोरू ।

# नव वर्षलाई स्वागत

हामी दुवै
देउराली चौतारी अनि भञ्ज्याङ्गहरूमा
असहाय गरिव दुःखी,टुहुरा र विधुवाको मर्म लिएर
लोक सुस्केरा, संगीत हाल्दै संगसँगै घुमेका थियौं
कहीले आशामा खुशी हुन्थ्यौं
कहीले कल्पनामा मुस्कुराउथ्यौं
म युवा थिए हरेक पाइलामा तिमीले डोऱ्याउथ्यौ
तिमी निश्चल पवित्र भावनामा रम्ने गर्थ्यौ
कहीले हतासमा रुन पुग्थ्यौ
कहीले खुशीमा हाँस्न पुग्थ्यौ
एकछिन एकैछिन भन्दा-भन्दै ती हरेक क्षणहरू लुक्थे ।

प्रत्येक दिन प्रभातकालीन नव किरण उदाउँदै
लुक्दै,झुल्कदै, अस्ताउदै गर्छ
एक एक दिन गर्दै धेरै समय धेरै दिन हुन्छ
हाम्रो सम्बन्ध गाढा अनि गाढा

मृत्यु पर्यान्त गाँसिएको छ
तर तिमी स्वीकार गर
तिमी निष्ठुरी, कठोर निर्दयी पनि छौ
किनभने, यस पटक पनि ३६५ दिन बितेको छ
जीवनमा धेरै चुनौतीहरू सामना गर्नु परेको छ ।

तर निष्ठुरी तिमी
शिर झुकाउदै हात हल्लाउदै २०५४ जस्तै
तिमी २०५५ पनि टाढा-टाढा
सधैका लागि टाढा गयौ
म स्तब्ध छु तिम्रो बिदाईमा
म झस्कन्छु तिम्रो आशामा
तर तिमी महान छौ
मानव गुण सिकेर आएको
वर्षेनी एक पछि अर्को सौतालाई पनि
स्वागत गरी रहने
विगत २०५५ महान तिमी
फकायौ सिकायौ प्रत्येक यी जीवनचर्या
त्यसैले मलाई
विगत फर्केर हेर्न मन लाग्छ ।

तेश्रो विश्व युद्धको निम्ति
सबै देश तयार हुन अल्टिमेटम दिने
२०५५ तिमीलाई इतिहासको एलवममा
सजाई राख्न मन लाग्छ ।
साम्राज्यवादी अमेरिकालाई हुर्काएर मात्र होइन
स्वाभिमानी सहासी इराकलाई पनि जन्माएर
स्वाधीन हामीलाई ऋणी बनायौ
धन्य छ ! तिमीलाई धेरै श्रृखला रची
नव वर्ष तिमी आई दिएकोमा
फलदायी,प्रेरणादायी एवं सुखदायी बनुन
भित्रिएको नव वर्ष २०५६ तिम्रो जीवन
हार्दिक स्वागत छ तिमीलाई । 

# आखिर शून्य

हरक्षण जिन्दगीको पृष्ठभूमि खोज्दै
छोडिएका दोबाटो टुङ्गिएको गोरेटो हिड्दै
मन-मनै धेरै पीडा र वेदना गुनगुनाउदै
एक्लै दरिद्रपूर्ण यात्रामा भौतारि रहेको छ ।

कुनै समय आफूले आफैलाई सम्झाउँछ
कहीले चित्कार रहित पक्षमा समाहित हुन चाहन्छ
तर वर्तमान आफ्नो प्रतिकूलताको पकडमा छ
जीवनलाई भावयुक्त अनुकूलताको अपरिहार्यता छ
विगत सफा र सुन्दरतामा सजिएको थियो
दिन प्रति दिन आपसी सद्भाव दृढतापूर्वक
विना हतास निरन्तर चलिरहेका थिए।

अफसोच !
हुरी बतास आई क्षत् विक्षत बन्न पुग्यो
बाध्यता बोकी समाज र परिस्थिति प्रवल भई भित्रियो
शक्तिशाली बाध्यता परिस्थितिसंग पराजित जीवन
आखिर शून्य-शून्य निराशतामा बदलियो ।

## सपनाहरू

सुवास्न छरी फूल्ने फूलहरू
कोपिलामा ओइलाए
उदाउँदै गरेको रक्तिम सूर्य पनि
बादलसंग लुकामारी खेले
झर्ना सरिका ती सुन्दर भावनाहरू
स्वार्थको विकट पञ्जामा फसिए ।

पूर्णिमाको सुकोमल नवरात्री पनि
धेरै टाढा सदाको लागि बिछोडिए
अनन्त फराकिलो आकाश सरिका
आशाहरू टुक्रा-टुक्रा भई टुक्रिए
मीठा-मीठा कल्पना र सपनाहरू बिलाई
आज जीवन वेदनामा तड्पिए ।



# माउण्ट किनावालु

माउण्ट किनावालु
तिमी त स्वाभिमानमा रमाएका छौ
समुद्रको डीलमा बसेर
चिसो सामुद्रीक बतास मात्र होइन
सी फूड, व्यापार पर्यटन् र
थुप्रै माछा मार्दै
दिनहरू गुजारा गर्दो रहेछौ ।

चार हजार पंचानब्बे अग्लो शिर उठाएर
दक्षिण एशियालीको प्रतिनिधित्व गर्दै
बेग्लै आफ्नो परिचय कमाएका छौ
अस्तित्वको निम्ति संघर्ष अनि
तिम्रो सामु थुप्रै विकटता पनि छन्
कहीले कोटा किनावालुको मिर्मिरे छिचोल्दै
कहीले त्यो पहरे बाटोमा सम्हालिदै
बादल हुरी बतास वर्षाको सामना गर्दै
तिम्रो इज्जत तिम्रो प्रतिष्ठा सधै-सधै
बाँची रहेको छ, बढ्दै गएको छ ।

ती चुरे पहाडको उच्च शिखर मात्र होइन
तिम्रो बफादार गर्ने
स्वावलम्बी नागरिकहरूको
गगनचुम्बी भवनहरू अनि
ठूला-ठूला पानी जहाज, हवाइ जहाज
छताछुल्ल छरिएका नेपाल भैँ
भुप्रा छाप्राले त्यति नै आकर्षित छौ
नेपालका हिम शिखरहरूसंग दौतरी खेल्दै
प्रत्येक पक्षमा नेपालको प्रतिनिधित्व गर्ने
तिमी माउण्ट किनावालु
साच्चै नै तिमी लज्जालु छौ
कहीले बादलमा लुक्छौ
कहीले पहाड र घुम्तिमा लुकामारी खेल्छौ
तर तिमी त्यो फूलवारी पार्कमा
कुनै बेला दार्जीलिङ्को रुपमा उदाउँछौ
कुनै समय यूरोपियन ढाँचामा बद्लिन्छौ
कहीले दक्षिणकालीको याद दिलाई दिन्छौ ।

चाहे तिमी जे गर, जे भन
मलाई त तिम्रो छातीमा
दाउरा काट्न र गोठाला गर्न मन लाग्छ
सुरिलो लोक सुसेलीमा लहरिन मन लाग्छ
छङ्ग छङ्ग भर्ने भरनाहरूमा भिज्दै रम्न मन लाग्छ
तिम्रो त्यो घनाअनकन्टार हृदयभित्र हराई
चिच्याउदै मेरो अन्तर भावना पोख्न मन लाग्छ
कुनै क्षण लड्दै जाने ढुङ्गा लडाउदै
धेरै तल खोला पुगी पानी पिएर
अलैंची गोड्दै, गोठ पुगौं जस्तो लाग्छ
उर्ली जाने भेल संग बग्दै
केही मिनेट भित्र समुद्र कहाँ पुगी
थकाई मारौं जस्तो लाग्छ ।

तिमी एक्लो छौ
तिम्रा साथीहरू त नेपालमा थुप्रै छन्
त्यसैले शक्तिशाली छन्
तर तिमी एक्लो छौ
धेरै प्रभावशाली छौ
किनकि तिमी प्यारासुटमा पनि
समुद्र तर्फ धकेलिन सक्छौ
पहराको मुहारले पनि पर्यटकको
मन सजिलै जित्न सक्छौ
वर्ष-वर्षमा हुने प्रतियोगिताहरूमा
धावकहरूलाई विजय बनाई
थप मनोरञ्जन बाँडी रहन सक्छौ
तिम्रो सहारामा हुर्केका
रनऔ, तमुनान, कनिनउ हुँदै
चक्कर मार्दै पुन: फेदी कोटाकिनावालुमा
बास बस्न आई पुग्दा साह्रै नै मन लोभ्याई दिन्छौ ।

बाटोको दायाँ बायाँ देखिने रोपाँईले
झनै अषाढ,श्रावणमा नेपाल पुऱ्याई दिन्छौ
गाउँ, बस्ति र वातावरणले
ठ्याम्मै नेपालको यथास्थिति दर्शाइ दिन्छौ
माछा नै माछा बेचिने फिलिपिनो मेला
अन्य धेरै मेला र शहर बस्तिले
पूर्वी ईटहरी, तरहरा, धरान, र भेडेटारको
स-गौरव प्रतिष्ठा बढाई दिन्छौ
तर तिमी सफा छौ, स्वस्थ छौ
मलेशिया शावाहको तिमी ढुकढुकी हौ
शिखर किनावालु शहर कोटा किनावालु
लाभुवन टापूको समकालीन छौ तिमी
त्यसैले तिमी सुन्दर छौ, सुन्दरी छौ
माउण्ट किनावालु ।

# मनुस्मृतिले

जहाँ नारीको पूजा हुन्छ
ईश्वर त्यहीं बस्दछ
मनुस्मृतिले भन्छ
नीति मंजरीले थप्छ
ढुङ्गा काठले बनेको आकृति घर होइन
जहाँ पत्नी छिन त्यही घर हो ।

यहाँ जुनै शास्त्रले जे भन्दै गरून
मानिसले मानिसलाई चिन्न सकेका छैनन्
बरु मानिस भएर राक्षसको व्यवहार गर्न पछि पर्दैनन्
यहाँ चलन यस्तै छ विवशता यस्तै छ
मानिस भएर पशुको व्यवहार गर्छ
जन्मसिद्ध सहनशीलता देखाउनु पर्छ ।

यहाँ त यस्तै हुन्छ
हुनेको मात्र आत्मा रुन्छ
उस्तै मान्छे यहाँ राक्षस समान हुन्छ
मानव भएर बाँच्न गाह्रो छ

तर शोषक सामन्ति धर्मबाट आशिष लिएर
कुर्ली-कुर्ली महिला चरित्र र नैतिकताको सवाल झिकेर
समाजलाई कुण्ठित निर्दयी कठोर बनाउदै
ऊ मोजमस्ती र आनन्दमा रमाउने गर्छ ।

उसलाई गतिशील समय, परिवर्तित संसारप्रति वास्ता छैन
देश र विदेशको विकास र प्रभावप्रति बेवास्ता छ
कति महिलाहरू असुरक्षित गर्भपतनका कारण
मृत्यूको शिकार बनेको छर्लङ्ग देखेको छ
तर, हाम्रो सरल सुन्दर समाजको आवाज झिक्छ
धर्मको कडा निगरानी समाजको लापरवाहीले
दर्दनाक पीडाले क्षत विक्षत बन्न पुगेका छन् ।

यसर्थ म सहयोद्धा बनेर
शोषक र सामान्ति बिरुद्ध लड्ने विचारले
आमूल परिवर्तनलाई पर्खिरहेछु
धेरै टाढाको देशमा मात्र आई पुगेको
आमुल परिवर्तनका लागि
थोरै भए पनि गोरेटो पहिल्याई दिएको छु
आशा र विश्वास छ मलाई
भोलि पछिको भोलिको दिनमा आईपुग्नेछ
तव म उसलाई साथ दिनेछु
तिम्रो सहयोगको लागि पनि आशा गर्नेछु ।

यी मेरा भावनात्मक क्रान्ति हुन
हाम्रो समाजका यथार्थ विडम्बना हुन
सायद स्वाधीन गुणले होला
म सँग धेरै प्रश्नहरू छन् ,उत्तर छैनन्
धेरै आशाहरू छन्, विश्वास छैनन्
तर, नारी चरित्र र धर्यताको परिवर्तनबाट
सुन्दर भविष्यको आश गर्ने साहस छ ।

# कुन्नि कहिले

यो मुटुमा माया बस्यो खै कसोरी किन
नचिनेको भनौं भने, देखे बोले जस्तो
हाँसी रहे खुशीरहें उनको निम्ति किन
सधैं-सधैं पर्खी बसुँ, देउराली, चौतारीमा ।

बोलिदिए खुशी हाँसी दिए पनि
तर लाज मान्छिन् झन
मिर्मिरे र गोधुलीमा
उसलाई भेटु कहाँ ।

त्यसै-त्यसै मेरो मन
रोई रहन्छ यहाँ
फूल राम्रो नाम राम्रो
फूल्ने त्यो फूलको
कति धेरै प्यास मीठो
निश्चल चोखो मायालुको
फूल हुन सके मैले कोपिला भई फूलुँ
उडी रहने पुतलीलाई निम्तो गरी बोलाउ ।

यो मनको साँचो बाचा
सँधै-सँधै भरिलाई
अन्यासै निश्वास बन्छु
कुन्नि कहीले सम्मलाई ।



# नैतिकता

समयको सेकेण्डसंग
चल्ने यात्राहरू
सुस्तरी घण्टाको सूईसंग
चल्न शुरु हुन्छ,
सूर्योदयको रक्तिम नवकिरणसंग
मध्ये दिनको अति न्यानोपन हुन्छ
सन्नाट शून्य माझमा
पीडाको चित्कार भेट्न सकिन्छ ।

क्षेत्रगत टाढाबाट
अथाह माया विभोर पनि पाइन्छ
वैशालु यौवनभित्र
अनगिन्ती रहर कौतुहलता हुर्कन्छ
हार र जीतका दोसाँधमा
नौलो समस्याहरू खड्कन्छ
सामाजिक हैसियतको साथ
कयौं बाध्यताहरू फक्रन्छ ।

कर्तव्य र नैतिकताको कारण
अनमोल इच्छा र आशा ओइलाउँछ
अनि कर्मलाई धिकार्दै
प्रगति पथ त्यागेर
यसरी पीडा र वेदनामा
प्रवासीत हुनु पर्छ । ❋ ❋ ❋

## कसरी रोजु (गीत)

समय बित्छ डिउटीमा मेरो
परदेशी जीवन

दुःख नै कति गरी रहूँ मैले
गाउँघरको सम्झना

फर्कनुहोस् भनि लेख्छिन् पत्र
चोखो छ त्यो माया

दोहोरो माया कहाँसम्म होला
ईश्वरको कृपामा

कति सम्झाउ यो दुःखी मन
वैशालु यौवन

न हाँस्न सक्छु न बोल्न सक्छु
उनको त्यो बिदाईमा

कतिञ्जेल पोखु पसिना मैले
प्रवासको माटोमा

कसरी रोजु यात्रा मैले
दोबाटो चोकैमा ।

## आउदैछु फर्की

*पर्खी बस तिमी*
*पिँढी र आँगनहरूमा*
*म फर्कि अब चाँडै आउँदैछु ।*

*मानिसको जन्म*
*बिछोडको कर्म*
*वर्षौं परदेशमा*
*घरपरिवारमा माया*
*गाउँघरको सम्झना*
*आत्माबोध गराई*
*लेख्छु पत्र*
*उनीको हातैमा*
*न त छ साथ न त लामो गाथा*
*पुग्दो छ वेदना*
*पर्खी बसेकी होली ?*

ती उदास दिनहरूमा
यीनै शब्द सौगात दिन्छु
यो शुभ वन्दना
सफा छ मौसम हर्षविहीन
प्रतीक्षाको स्पन्दन
उनीलाई दिन्छु बाचा आउने
कहीले काहीँ पूरा गर्न सक्दिन
तड्पाईको दुखाई
यो आँसु रसाई प्रवासमा
वैशालु माया
चंचले मन
कर्मले दिएन ।

उक्कुस-मुक्कुस रहर इच्छा
अल्लारे यौवनमा
रहर खुम्च्याई
कल्पना फिजाई
भाग्यले हरेन
दु:खको छ लेनदेन
आश्वासन भुठा म दिन चाहन्न
पवित्र मायामा
आउँदैछु फर्की
आउँदो वर्षमा
प्रतीक्षा गर, फरक पर्दैन ।



# एकान्तमा

उ सुति रहेछ सुत्न दिनुहोस
किनकि, उसले निद्रा पुऱ्याउनु छ
निद्रामा डुबेको, उसलाई बताई दिनुहोस्
किनकि रक्तिम किरणले झ्यालबाट चियाई रहेछ ।

अब उसलाई ब्यूँझाई दिनुहोस
किनकि बिहानी झुल्की सकेको छ
गाउँ-गाउँ झुप्राहरूमा गई सहारा दिनुहोस्
किनकि यत्रतत्र गुहारको आवाज गुञ्जि रहेछ ।

छाप्रा, गोठ, घोरेटो, मठ-मन्दिर र विद्यालयको
सामूहिक जिर्णोद्वार गर्नुहोस्
किनकि प्रगतिशील समयले जिस्काई रहेछ
आतुर-आतुर भञ्ज्याङ्ग चौतारीहरूमा जानुहोस्
किनकि त्यहाँ परिवर्तन र विकासले पर्खी रहेछ ।

सम्झाउदै विगत, वर्तमान र भविष्य बताई दिनुहोस्
किनकि उसले यथार्थ धेरै बिर्सी सकेको छ
हिड्न नसकेर छोडिएको उसलाई दया गर्नुहोस्
किनकि ऊ लङ्गडो, एकान्तमा हराई चिच्याई रहेछ ।

  

## त्रिकाल

भूलि रहेछ विगतले
त्यो आफ्नै स-हृदय भए पनि
हेरी रहन्छ वर्तमानले
म समस्याको कठघरामा फसिरहेको भए पनि
औंल्याई रहेछ भविष्यले
म एक्लै आफ्नै धुनमा हिडिरहे पनि
रहर, अभिलाषा र कर्मबीच दोधारमा
ज्यूँदो लाश झैं जीवन चलिरहे पनि ।

कतै वेदनाका चित्कारहरू छन्
कतै रोदनका नयनहरू छन्
कहीले आँखा चिम्लि निश्वास बनी
नकार्दै धिकार्दै, अभिलाषाका क्षणहरू छन्
यत्रतत्र छरिएका समस्यै समस्याहरू बीच
निर्लज्जन कठङ्गिएका हातहरू छन्
तर विह्वल छन् आँखाहरू कतै सहारा खोज्ने आतुरमा
स-मिश्रीत विगत वर्तमान र भविष्यको
रणचक्रभित्र अवस्थित विवशीत छ
यो जिन्दगी !

## संगीत हूँ म

छोपिएको चन्द्र हूँ म
बादल हटाई देऊ
सारङ्गीको संगीत हूँ म
व्यथा सुनी देऊ
बिहानीको सिर्सिरे हूँ म
नव किरण बनि उदाई देऊ
पहाड झैं अटल हिमाल हूँ म
लाली छरी देऊ ।

चौतारीको सिर्सिरे बतास हूँ म
सन्देश पुऱ्याई देऊ
अन्धकार बीचको ध्रुवतारा हूँ म
रातमा आउने चन्द्रमा हटाई देऊ
बगिरहने सङ्लो पानी हूँ म
प्यास मेट्न आऊ
भोलि फूल्ने कोपिला हूँ म

सुवासना थपी देऊ
प्रतिबिम्ब खिच्ने ऐना हूँ म
मलाई हेरी देऊ
जवानीको भावना हूँ म
मेरो चंचलतामा रमाई देऊ ।

उकालीको प्रतीक्षालय हूँ म
तिमी आई बसी देऊ
मीठो प्रीतको आलोचक हूँ म
मलाई सम्झाई देऊ
एकान्तको विह्वल व्यक्ति हूँ म
तिमीले सहारा मलाई देऊ
प्यासा बोक्ने आभारा हूँ म
प्रेम सिकाई देऊ ।

बिरक्तिएको आत्मा हूँ म
सान्त्वना मलाई देऊ
फाटी जाने निष्ठुरी हूँ म
माया प्रीतले जिती देऊ
आकाश जस्तो विशाल हूँ म
बिलाई जाने बादल हटाई देऊ
सुख दुःखको साहित्य हूँ म
कवि,कवयित्री जन्मि देऊ ।



# सम्झना कोर्दै (गजल)

नपाए पनि चाहना तिम्रो के गर्नु मनले
भन्दैथें म त, यसरी हामीलाई छुटायो समयले ।

झुल्केको चन्द्र अस्ताएको सूर्य बेलुकी हुनाले
जे भयौ टाढा सम्झन्छ सारा यो मेरो आत्माले
सुवासना छरी फूलेको फूल कोपिला हुनाले
बितेको दिन झन मीठो लाग्छ यो दिल रुनाले ।

साउनको झरी भदौको भेल वर्षायाम पर्नाले
गन्दैथें दिन बितेछ क्षण अभागि हुनाले
स्वर्गको माथि हिमाल भरी लालीले छाएको
बिर्सी दिउँ भन्थें मान्दैन मन कसम खाएको ।

जाडो– त्यो डाँडा, घुमी नै रहें साथ तिम्रो पाउनाले
चस्केर पोल्छ यो छाती मेरो, म एक्लो बेसहारा हुनाले ।
चर्दछ वस्तु त्यो भीर, पाखा गोठालो गर्नाले
चर्केको घाउ नचर्काउ भन्थे तिम्रो याद आई रहने हुनाले
हराएको– आकाश सधैंको लागि अदृश्य बन्नाले
लुकेको आश यो जीउँदो लाश मलामी खोज्नाले
गोधुली साँझ दोबाटो माझ छुटियो पाइला कर्ममा नहुनाले
सम्झना कोर्दै शुभ कामना तिमीलाई, पराई बन्नाले ।



## लाहुरे

स्वस्फूर्ति सरल र सहज
आजकालका लाहुरे
हेण्डसम सफा र सुन्दर
आजकालका लाहुरे
रफ एण्ड टप आधुनिक
अत्याधुनिक आजकालका लाहुरे
संसारका कयौं देशहरूमा घुम्ने
घुमन्ते आजकालका लाहुरे ।

धेरै देश झण्डा, पैसा र मानिसका दर्शक
यात्रु आजकालका लाहुरे
धेरै भाषा सिक्ने आशा राख्ने
बहुभाषी आजकालका लाहुरे
भाग्यको लेखाई हजारौं हजारको भिडाई
सुयोग्य आजकालका लाहुरे
सुन्दर यो परम्परा विश्वासको दियो झैं
बफादार आजकालका लाहुरे

कोही थिए शिक्षक कोही सुब्बा
आजकालका लाहुरे ।

विद्यार्थी हुन गरेनन् भूल आजकालका लाहुरे
भाग्यले दियो कोशिशले तान्यो
भाग्यमानि आजकालका लाहुरे
बचाउँछौं देश नारा लगाई हिड्थे
देशभक्त आजकालका लाहुरे
वीरको छोरा देशको आशा
उद्यमशील युवा आजकालका लाहुरे ।

वारुद र कम्प्यूटरसँग खेल्ने
लडाकु खेलाडी आजकालका लाहुरे
इज्जत कमाई प्रतिष्ठा बढाई
घर फर्कने आजकालका लाहुरे
विदेश बसी अनुभव बोकि
गौरवान्वित आजकालका लाहुरे
गर्नेछु भनि, युवाहरूको गोल्डेन ब्वाई बनि
पसिना पोख्ने आजकालका लाहुरे ।

शिक्षाको इज्जत धनको सम्मान
यी धैर्यवान् आजकालका लाहुरे
काम छ सेना सालीको भेना
वैशालु आजकालका लाहुरे
जानेछ लडाइ जित्नेछ लडाइ
वीरगाथा आजकालका लाहुरे
न्यायको मूर्ति अन्यायमा लड्ने
स्वाभिमान आजकालका लाहुरे ।

सबैमा बिन्ति देश प्रति चिन्तित
चिन्तनशील आजकालका लाहुरे
कहीले चार्ल्स र सुल्तानसँग

प्रतिस्पर्धामा लड्ने आजकालका लाहुरे
इमान्दारिताको कामले वीर, गोर्खालीको नामले
विश्वमा परिचित लाहुरे
तर अफसोच भनौं, विडम्बना मानौं
स्वराष्ट्रमा अपमानित छ, लाहुरे ।

संसारमा घुम्छ विश्वलाई हेर्छ
पर्यवेक्षक भैं आजकालका लाहुरे
जन्मन्छन् लेखक र साहित्यकार
साहित्यलाई धनी बनाउँछन् लाहुरे
देहरादुन लाहुरे आजको लाहुरे
परिवर्तन कति छुट्याउनुहोस् सबैले ।



## फूल बनेर

कति धेरै माया गरें आफ्नै सम्झिएर
धेरै पर्खें धेरै सम्झें आफ्नै भई दिएर ।

पीडाहरू लुकाई मिलनलाई सम्झेर
आशा रहर बढिरह्यो तिमीलाई चाहेर ।

क्षितिज पारि मन डुले आत्मा रुवाएर
विश्वास गरी कसम खाएँ साँचो सम्झिएर ।

भूल थिएन, गल्ति होइन बाचामा बाँधिएर
जति थिए चंचले भावनाहरू तिमीलाई दिएर ।

द्वेष किन, दोष किन ? मुटु चर्काएर
यात्रा लामो छोडी गयौ बाचा बन्धन लत्याएर ।

बढिरहुन् निष्ठुरी ती पाइलाहरू स्वतन्त्र भएर
तिम्रो जीवन फूलिरहोस् सुन्दर फूल बनेर ।

# नेपालको इतिहास

म मेरो देशलाई नियाल्छु
गौतम बुद्धको शान्तिलाई सन्देश
सीता र भृकुटीकी आदर्श र अस्मिता
अनि वेदव्यास झैं लेखन शक्ति
प्रथम शहीद लखन थापाको वीर गाथा
तेअङ्सी श्रीजङ्गा र फाल्गुनन्द विभूतिहरूको
कल्याणकार्यबाट गौरव लाग्छ मलाई ।

भक्ति थापा, बलभद्र कुँवर,माथवरसिंहका बहादुरी
राम प्रसाद राई जस्ताका साहसले
प्रेरणा बनि पथ प्रदर्शन गरेको छ नेपालीलाई
२००७ साल २०१७ र २०४६ साल
हामी कहील्यै बिर्सन सक्दैनौं
किनकि साँचो इतिहास त्यहाँ छ
हामीलाई नेपालप्रति माया छ
महान व्यक्तित्व गणेशमानप्रति श्रद्धा छ
मलाई २००७ सालको धोकेवाज प्रति
घृणा छ,
जातिवादी षडयन्त्र दिल्ली सम्झौताप्रति
मलाई गहिरो खेद छ ।

## पवित्र माया

परदेश जान्छु पवित्र माया बोकेर
फर्की आउनेछु एक दिन, प्रियलाई सम्भेर
नपोख ती आँसुका थोपाहरूलाई
हाम्रो विछोड पो हुन्छकि भनेर ।

कसमको बाचा पुकार्नु पर्छ
यो प्रीत हाम्रो अधुरो नबनोस भनेर
घाम छायाँ जीवन बाँचिन्छ के भर
तर प्रीतलाई सम्भी बाँच्ने छ यो बाचा
अकस्मात बीचैमा मरे स्वर्गमा भेट्ने छ आशा ।

❋❋❋

# समाजदेखि हारी सकें

समय र परिस्थिति कति-कति निष्ठुरी हुन्छ
अनि समाज र बाध्यता कति बलियो हुन्छ
त्यस पछिका पीडा र वेदनाहरू कति उदासपूर्ण हुन्छ
कठ्याङ्ग्रीने जाडोमा आछु-आछुको विवशता कस्तो हुन्छ ?

दरिद्र आत्माहरूलाई सोध्न मन लाग्छ
अनि यही आत्माहरूमा खोज्न मान लाग्छ
अफसोच
पहिले नै एक पटक समाजदेखि हारी सकेको
यो आत्मामा पश्चाताप कर्मको खेल भन्नु भन्दा
अरु छैन
यद्यपि यी भावनाहरू
आशामा बाँचेको छ ।



## मौन स्वरहरू

वैशालु जवानीसँगै यो मनमा अधैर्यताले छाएको छ
रहरै रहर मीठो क्षणको परिकल्पनाभित्र
कहीले आशा कहीले विश्वास मनभित्र हुर्केको छ
अथाह ती इच्छा प्रतीक्षाको सिमाङ्कन हटाई
बन्दसत्र शून्यतामा चिच्याउँदै उडी जाऊ
तत्काल भेट गर्न जाऊ कसैसँग समाहितलाई बिलाऊ ।

यी अवशेषका मौन स्वरहरू, अन्धकार चिर्दै
टाढा कसैको सामु गई, सहमतिलाई स्वीकारोक्ति ल्याउन
भावनाका वाक्यरुपी शब्दहरू
पठनयुक्त, मननयुक्त चिन्तनयुक्त भनि सम्झुन
अनन्त मनोतरङ्गहरू प्रस्फुटनको संघार टेक्दै
असिम प्रियताको साथ मन भित्र भित्र्याउन
मन तृष्णाका अन्तरद्वन्दीहरू बिना संकोच
बिना शर्त मित्रताको निम्ति आवद्ध रहुन
अन्तर भावनाका सुन्दर सपनाहरू सबै
सुस्पष्ट, सुनिश्चितताले सफलीभूति बनुन् । ❋❋

## मर्छ काल पनि

म पढ्छु समाचार पत्रहरू
म हेर्छु कार्यक्रमका पूर्वाधारहरू
साथीको प्रगतिमा बधाई
अर्को खबर पढ्छु, अर्को साथीलाई बधाई
कही समाज सेवा, कहीले मन्तव्य
कुनै बेला अभिनन्दन पत्र कही प्रेस विज्ञप्ति
यत्रतत्र समाचार पत्र पल्टाउँछु
युवा शहीद स्वाभिमानी देशभक्तका आहुती
विगतलाई रुग्न भावनाले नियाल्छु ।

कोही साथी दुर्भाग्यको फन्दामा
कुनै साथी सिंगो देशको आदर्शमा
विशाल इतिहासको रणक्षेत्र भित्र
आत्मा सम्मान र गौरव बोकेर
समाजको स्वाभिमान अस्मिताको पहरेदार गरी रहेछ
मर्नु र बाँच्नुको वास्ता नगरी जन-कल्याण भनि
योगदान दिने बफादार नागरिक प्रति उच्च सम्मान

तर अनन्त गोरेटो बीच दोधारमा उभिएकाहरूलाई
यथार्थमा बाँच्नुहोस् भनि शुभकामना
प्रगति कोशिश र अमर योगदानमा हुन्छ ।

यसरी मानिस मरेर बाँच्छ, बाँचेर पनि मर्छ
कति बाँच्छन् कति मर्छन् इतिहास निर्माणकर्मीहरू
सुन्दर नेपाली रगतको मुटुभरि माया बोकेर
कहीले पीडामा पग्लिरहन्छौ
यस्ते-यस्तै विचित्र यथार्थभित्र घुम्दै
आभास र अनुभूतिहरू अनौठो लाग्छ
हो, महानतालाई चिन्दैनन् बाँचुन्जेल कसैले
तर मरेपछि संगीत बनाउँछन् सबैले
भनिन्छ पाइन्न सम्मान इतिहासको लागि
दिने योगदान कर्ताले
तर काल परिस्थिति अनुकुल गर्छ मूल्याङ्कन समयले
नफुटौं हामी एकतामा, नछुटौं हामी अनेकतामा
स्वस्थ रहे मर्छ काल पनि हाम्रो अनुग्रहमा ।



## श्रीजङ्गालाई

महान तेअङ्सी श्रीजङ्गा दिवाङ जी
तिमीलाई मेरा लाखौं-लाख वन्दना
अन्धकार बीच दियो बनेर
दियौ धेरै प्रकाश छरेर ।

छोपिएको गोरेटो दियौ खोजे
त्यसबेला हामी अनविज्ञ थियौ
तिम्रो भावना बुझ्न सकेनौ
ज्ञान भएन हाम्रो समाजलाई
दिनुहोस् माफ हामी सबैलाई ।

भई गयो ढिलो तिमीलाई पाउनै सक्यौं न गुमाउनै
भन्छन् मूर्खलाई सम्झाउनै सकिन्दैन
नमूर्खलाई सम्झाउनै पर्दैन
तर, हामीलाई मृत्यु पर्यान्त कन्दनले
छात्ती पोल्न शुरु गरेको छ ।

मंसीर पूर्णिमाको दिन
याङ्वारिक प्रान्तमा जन्मेर
सैतीस वसन्तपछि कलिलै उमेरमा
गयौ सारा जगत्लाई छोडेर ।

सिक्किम पेमायात्से गुम्बाका राक्षसहरूले
मातेन गाउँको छेउमा निर्वस्त्र पारेर
रुखमा बाँधी वाणले हानेर
गऱ्यौ तिमीले के गल्ति सिक्किम पुगेर
टुहुरो भयौ तिमीले छोडेर ।

सम्झना गर्छु झुन्डाई मारेको फोटोलाई हेरेर
फाल्यो लाश रंगित नदी बोरामा बाँधेर
व्यर्थ जीउँनु भन्दा वीर भएर मर्नु असल भनेर
बोल्यौ यी अन्तिम भनाई हामीलाई सम्झेर
धन्य छ त्यो तिम्रो योगदानलाई ।

जान्छौ माङहिम तिमी फेरि आऊ भन्नलाई
गयौ तिमी बोरामा पसेर
रगत बगे नदीमा मिसिएर
सत्य एक्लो सिक्किम पुगेर
फर्की आऊ फेरि हामीलाई सम्झेर ।

कति दुःखे रुखमा झुण्डाई वाणले हान्दा
झस्कियो जगत तिमीले स्वाभिमान देखाउँदा
भोक तिर्खै हिड्थ्यौ धर्म, संस्कृति प्रचार गरेर
हाम्रो माझ दैवीय शहीद, शिर ठाडो पारेर
गयौ टाढा हामी सबैलाई छाडेर ।

भेटी छोड्छौ तिमीलाई रंगित नदीमा खोजेर
सिक्किम महान मातेन महान श्रीजङ्गाको रगतले पोतेर
भन्नु गर्नु धेरै रहे होला, भोलिलाई पर्खेर
छोडी गयौ केही, फाल्गुनन्द, आत्मानन्दलाई दिएर
लिनेछौं हामी त्यहाँ, श्रद्धाञ्जली तिमीलाई ।

❋❋❋

## विद्यार्थी जीवन

आज जस्तो लाग्छ
ती विगतका तीतामीठा दिनहरू
अहिले पनि
त्यही अवस्थामा छु जस्तो लाग्छ
कहीले पुस्तक च्यापेर
दौतरीहरूसँग
रमाइला रमाइला गफमा भूल्दै
मलाई यस्तो पत्र लेखी
अनि मैले जवाफ यस्तो लेखें
हो माथिबाट भगवानले पनि
हेर्दो रहेछ ।

तिमीहरूको जोडी साह्रै मिलेको
म साथीको प्रशंसा गर्थें
साथीले मेरो
अझै पनि म संग छ
विद्यार्थी परिचय पत्र
त्यसैले आज पनि बस भाडामा
दलाल गरी कन्शेसन मागूँ जस्तो लाग्छ ।

भोलि पनि त्यो क्यान्टिनमा बसेर
साथीहरूको पर्खाइका बसूँ जस्तो लाग्छ
फेरि भरे पनि साथीको कोठामा गई
थरी-थरीका गफ छाँट्दै
चामल र सब्जी महङ्गो भएको
डेरा भाडा र मासिक फी बढेकोले
घरमा गई कुखुरा, परेवा, घ्यूँ र बाखा
बेचेर पनि खर्च नपुग्ने भएकोले
धेरै गुनासाहरू डेरावासी
साथीहरूसँग पोख्न मन लाग्छ ।

प्रशासन र लाइब्रेरी समस्याबारे
आफ्नो समूह मार्फत कानूनी शब्दमा
क्रान्तिकारी आन्दोलनको तयारीलाई
निम्तो गर्न, स्ववियू र संगठनका
साथी कहाँ जाउँ जस्तो लाग्छ
हड्ताल र दूषित वातावरणले
पढाई गोलमाल भएको हुँदा
फाल्टो टयूशन पढ्न जाउँ भने,
डेरा भाडा पनि तिर्नै पर्ने हुन्छ
जागिरको खोजीमा लागूँ भने
धमिलो राजनीतिज्ञको पछि
लाग्नु पर्ने हुन्छ ।

फर्केर हतार-हतार स्टोभ जलाउँ भने
भारतले नाकाबन्दी र नेपाल बन्दको कारण
मट्टितेलको अभावमा
पानी पिउदै भोक मेटाउदै
हस्याङ फस्याङ
झिनो झिनो हाँगा दाउरा खोज्न
डराउँदै-डराउँदै टाढा जंगल जानै पर्ने हुन्छ
तर कुनै बेला

पत्र मार्फत उनीको सम्झना र प्यार
पुऱ्याउन आउने समकालीन मित्रसँग
मीठो-मीठो आशाका कुराहरू गर्दै
अबेर क्षण बितेपछि
आफैंलाई कहीले
आशा र प्रतीक्षामा समाहित बनाउँछु
अनि भावानात्मक प्यार शब्दका कोसेली
आतुर-आतुर प्रतिउत्तर पत्रमा लेख्छु
उनी आफ्नो अन्तर भावनाहरू, भित्ते पत्रिकामा
मुक्तक र सायरीका रुपमा राख्छिन् भने,
कहीले पत्र पनि लेख्छिन्
क्रमश: दिनहरू बित्दै जान्छ
तर भोलि धेरै टाढा छ
अनिश्चित छ ।

अनन्त गन्तव्य पथहरूमा
यात्रा गरी रहेछु
जीवनका कैयौं मोडहरूमा
उतारचढाव र चुनौतीहरू आए
सम्हालिदै सामना गरिरहेछु
समाज र परम्पराको
कठघराभित्र ठिङ्ग उभिएर
धेरै परिस्थितिसँग सम्झौता गरी
विवेक विधाता या चरित्र निर्माता बीच
प्रकाशको छायाँभित्र रुमलिदै
प्रवासमा बसेर पनि
विगतलाई वर्तमान बनाई
मलाई विद्यार्थी जीवन बिताउन
रहर लाग्छ,
मलाई विगत मीठो लाग्छ
मलाई विद्यार्थी जीवन नै राम्रो लाग्छ ।



## बिरामी अनुभव

बिरामी हुँदा अस्पताल जान्छु
बिराम निको हुन्छ कि भनेर
अस्पताल बस्छु
जाती निको हुने ठूलो विश्वास लिएर
नबुझे पछि समस्या हुन्छ
विदेश ठाउँ भएर
सोध्दै खानेकुरा ल्याउँछ
अंग्रेजीमा भन्यो ल खान्छु बोलेर
खान्छु भनि तयार भयो
थन्काउन लान्छन् ओ सरी भनेर ।

अक्क न बक्क उपहासी बन्यो
ती विदेशी डाक्टरहरूलाई हेरेर
सबै बिरामीलाई भेट्न आउँछन्
**GET WELL** कार्ड दिई जान्छन् फर्केर
आफू त बेसहारा वैरागी मान्छे
आउदैनन् कोही आफन्त भुलेर
अंगालिन्छन् बरु उनीहरू
आफूलाई हेर्न हैरान छ कुरेर
अरुका छन् साथीभाई हजार
आफू त एक्लै क्षितिजमा नजर
अरु बाई-बाई भन्दै घर-घर फर्किए
म त छु उस्तै आँसुलाई पुछी टाउको हल्लाए
कता कता नराम्रो लाग्छ गाउँघर सम्झेर
सम्झना आउँछ नमीठो लाग्छ
प्रवासी विवशता सहेर ।

## परिवर्तित जन्म

मलाई यो अन्धकार रात मन पर्छ
किनकि रात पछि अब बिहानी हुनु छ
मलाई मस्त निन्द्रा मन पर्छ
किनकि अब निद्रा पुऱ्याई ब्यूँझनु छ
बाँकी अज्ञानता पनि राम्रो लाग्छ
किनकि अब अज्ञानतामा ज्ञान बढाउनु छ
तर उज्यालो मात्र भएर पनि
यदि अन्धकार छैन भने ?
देश परिस्थितिको विवशता बोकेर
विगतमा घिस्रदै विदेशिएका गोर्खालीहरू
कुनैबेला तड्ग्रने तरखरमा
अनेकौं आरोह-अवरोह पार गर्न पुग्यो
कसैबाट आरोप-प्रत्यारोप पनि आए ।

वीर, गोर्खालीहरूको विषय बनाएर
धेरै कलम र अनेकौ आवाजहरू पनि भेटिए
अफसोच, कलम त्यही हिजोलाई दृष्टिपात गर्छ

आवाजहरू स्पष्ट गुन्जन्छन्
गोर्खालीहरूको इतिहास भन्दा पछि जन्मिएको
मार्क्स र लेलिनको सिद्धान्तले पनि
धेरै परिवर्तित जन्म लिई सके
पहिलो र दोश्रो विश्वयुद्ध पछि
संसार तेश्रो विश्वयुद्धको संघारमा उत्रिएको छ
प्राचीनकालका बाँसका खपेटा रुखका बोक्राहरू
आज कम्प्युटर र आणविक विकासमा बद्लिएको छ
हिंजो इतिहासको देहरादुन र मलायाका ठाउँहरू
विश्वका देशहरूमा बाँडिएको छ
तर देहरादुन र मलायालाई किन वर्तमान ठान्ने ?
जुन देशको कुटनैतिक सवालसँग सम्बन्धित छ
विश्वमा गोर्खाली भनि उच्च सम्मानित छ
विडम्बना भनौ गोर्खाली शब्दलाई
सुहाउँदो स्थान दिन नै बाँकी छ
त्यसैले त हामी मूर्ख छौं ।

लाहुरेको पीडा र देशप्रतिको आघात मायाले
यथार्थमा स्वयं लाहुरेलाई रुवाई रहेछ
अन्ततोगत्वा गोर्खाली शब्द
साटिएको निष्ठुरीपनले आएको होइन
बहादुरी र महानताको हो
स्वाभिमान नेपाली र बफादारिताको हो ।
यसर्थ रगत र पसिनाको महत्व खोज्दै
छातीमा हात राखेर चिच्याउन मन लाग्छ
मर्नु र बाँच्नुको कुरा भन्दा पहिले
हामीलाई आफ्नो राष्ट्र नै प्यारो लाग्छ ।



# पर्खी बस

पर्खी बस चौतारीहरूमा
म चाँडै फर्की आउने छु
साँची राख प्रीतिहरू
म सम्हाली लिई आउनेछु
जलाई राख दियो ज्योतिहरू
म उज्यालो खोज्दै आउनेछु
फूल्न देऊ कोपिलाहरू
फूलको सुन्दरतामा म रम्न आउदैछु
बिछ्याई राख गोरेटाहरू
म हतार-हतार पछ्याई आउनेछु
माया दिई राख सुस्तरी हावाको सन्देशलाई
शितल छहारी बनि म आउने छु
फक्रन देऊ सुन्दर भावनाहरूलाई
म सुन्दर भावनाको खोजीमा आउनेछु
रमाउन देऊ चिरविर-चिरविर आवाजलाई .
म त्यही मीठो आवाज रोजेर आउनेछु । 📖

# अतृप्त मनोकांक्षा

उनी मेरो पहिलो
भेटमा मन परेको
साथी,
संजोगले भनौं
हामी दुई भएर
धेरै-धेरै दुःख गर्नु पर्‍यो
भेटमा भावनात्मक रमाईलो मनायौं
खुशी हुन्थ्यौं
उनले मेरोबारे के-के सोच्थिन
त्यो त मलाई थाहा छैन ।

तर,
हाम्रो पारिवारिक साइनो
सोल्टि र सोल्टिनीको
चिनारी पछिका
स्वाभाव व्यवहार सम्बन्धले

अरु त कुन्नि
मेरो चाहिं मनले जितेको साथी
रहर र कौतुहलताले भरिपूर्ण
यो वैशालु यौवनमा
अनेक मनोतरङ्ग बतासिन थाल्छ
अथाह सपनामा डुब्न थालें ।

तर,
एक सेकेण्डको कुरा हो
सामाजिक बाध्यात्मक दबाबबाट
उम्कन सकिन
अनि, टाउको यसरी हल्लाई दिएं
हुन्छको स्वीकारोक्ति गर्दै
जे नहुनु पर्ने थियो
त्यो भई सक्छ
जे हुनु पर्ने थियो पर्दा पछाडि लुक्छ
अतृप्त मनोकांक्षा चाहनाहरू
अन्तर आत्माभित्र
बाँचिरहेको हुन्छ ।



## को हुँ म ?

म त टुसाएको मुना न हुँ
मलाई कस्ले टिप्न रोज्छ
बरु ढकमक्क फूलेको फूलसँग रमाउन पुग्छ
म त सामाजिक बाध्यतामा हारेको हुँ
मलाई कसले विजय श्री भन्न सक्छ
म त जन्म र मृत्युमा
अकेला हुँ
मलाई कसले स्वतन्त्रहीन भन्न सक्छ
म त सल्किएको मैन बत्ति हुँ
कुनैबेला निभ्न सक्छु
निभेको त्यो मैनबत्तीको
अस्तित्व अस्मिता के नै हुन सक्छ
त्यसैले म त क्षितिज हुँ
मलाई नियाल्न गाह्रो हुन्छ ।

म त उडिरहने बादल न हुँ

मेरो पुग्नु पर्ने सिमा छैन
म त बगी झर्ने खहरेको पानी हुँ
धमिलो भई चढ्नु पर्ने कहीं छैन
म त माया दिएर मायाको सौदा गर्ने न हुँ
मसँग त्यति सुन्दर बजार नै कहाँ छ र ?
छताछुल्ल बजारहरूमा यत्रतत्र
लिलामी बढाबढमात्र हुन्छ
म त त्यागिएको आशा न हुँ
फेरि मलाई कफिनभित्र पस्नु किन
बरु म त हाँसो दिएर हाँसो खोज्छु
विवश मलाई आँसु आउछ
आँसु दिएर आँसु खोज्छु
स्वयं आफैलाई अस्तित्वहीन पाउँछु ।

***

# पिएरै जीती दिन्छु

मलाई केही गर्नु छ
मैले केही गर्नु छैन
मलाई ठूला-ठूला जिम्मेवारी आउँन्
कति मिलनका सुखमय
खुशीहरू आउँन्
कति बिछोडको बेदनाहरू आउँन्
कुनै व्यवहारिक समस्याले पिरोलुन्
मसँग जादुगर कला छ
मसँग बेग्लै शैली छ
मलाई प्रतापी बहादुर
साथीको साथ छ ।

उसको निम्ति म केही दिन्छु
उसले मलाई भरपुर मद्दत गर्छ
म उसको ऋणी छु
धेरै-धेरै ऋणमा डुबिसकेको छु

बरु यसो भनुँ
मैले उसैसँग दाम्पत्य जीवन
बिताईरहेको छु
हर साँझ हर रात
ऊ, मेरो वशमा हुन्छ
मानौ, हामी एक अर्कामा अनुबन्धित छौ
ऊ बाहेक म न त जीउँनै सक्छु
न त म बाहेक ऊ अस्तित्ववान् नै बन्न सक्छ
मलाई आत्मा विश्वास छ
जस्तोसुकै बाधा व्यबधान आउँन्
मसँग योग्यता छ
चिन्तन छ,
सजिलैसँग कुशलता देखाई दिन सक्छु

जति नै प्रवल पीडा किन नहोस्
म भन्दा शक्तिशाली शत्रु किन
नहोउन्
म त निश्चिन्त सुतेरै जित्न सक्छु
म त पिएरै जीती दिन्छु
किनकि म कुम्भकर्ण हुँ
म त हड्‌रायो हुँ
मसँग मद्यपान, धुम्रपान, दुर्व्यसनी
कुलतको प्रमाणपत्र छ
समग्रमा भनुँ
मैले वस्त्र लगाउनु अर्थहीन छ
मेरो निम्ति संसारको विपरीत गति छ
तर, म पिएरै जीती दिन्छु ।

* *

# प्यारो झण्डा

ऊ धेरै खुशी छ
ऊ बोलेर रमाउँछ
ऊ हाँसेर रमाउँछ
ऊ बाँचेर रमाउँछ
ऊ हाँसिरहेको हुन्छ
स्वाभावैले उसलाई प्रश्न उठ्छ
कसैले उसलाई प्रश्न गर्छ
म को हुँ ?
हामी को हौं ?

आफ्नो देशको स्वतन्त्र नागरिक
देशप्रति उसको कर्तव्य छ
नैतिकता र जिम्मेवारी छ
विश्वको शिर सगरमाथाको देश
शान्तिका अग्रदुत गौतमबुद्धको देश
चार वर्ण छत्तीस जातले बनेको देश
हो, यसैमा पहिचान छ

देशमा मौलिक बहुधर्म, संस्कृति
राष्ट्र, राष्ट्रियता
सार्वभौमिकता स्वतन्त्रता छ ।

कोही कुनै ठगिएका छैन
दाम्लोमा बाँधिएका छन्
अध्यारो कोठाभित्र थुनिएका छन्
ऊ पसिनाले सिंचित गर्छ
मलिलो माटोमा उब्जनीलाई
फूलाउँछ, फलाउँछ, रमाउँछ
उसँग बेग्लै खुशीहरू छन्
उसँग आफ्नै दु:खहरू छन्
सुन्दर समाजभित्र
उच्च अस्मिता बोकेका
विदेशिएका उद्यमशील
पौरखका स्वावलम्बी
ऊ चाहन्छ चिच्याउन सक्दैन
उसलाई अरु झण्डा होइन
आफ्नै देश नेपालको
प्यारो झण्डा
देश परदेशमा चाहिन्छ ।



## मेरो नाम, काम र भविष्य

ऊ मान्छे म पनि मान्छे
ऊ स्वतन्त्र देशभक्त नागरिक
उसले गौरवमय पहिचान बोकेको छ
देश र नागरिकको निम्ति गौरव गर्छ
ऊ आफ्नो अस्तित्वलाई लडिरहेको छ
इमान्दार बफादारको बफादार गरिरहेको छ
तर, तरको दोसाँधमा
म अफ्नो स्तरीयता देखाउन चाहन्छु
विदेशी नक्कलमा स्वदेश बिर्सन्छु
विदेशीपनाले स्टाण्डर बढेको आभास लिन्छु ।

अफसोच !
यथार्थमा म स्तरहीन बनि रहेछु
म आफ्नो हात होइन

चम्चा काँटालाई महत्व दिन्छु
आफ्नो घर भत्काई
भाडामा बस्नु उच्च ठान्छु ।
मलाई आतुर छ इज्जत बढाउन
कुनै प्रवाह छैन यथार्थ बुझ्नलाई
म त शिक्षित पढालेखा आधुनिक
लाटोको गाउँमा गाँडा तन्नेरी
हात्तीको शेखी कुकुरमाथि
निर्जीव फूल झैं फुलिरहेको छु
अब मेरो भविष्य छैन, केही छैन
आफ्नो बारेमा पनि चिन्ता छैन
हजुर ! कुनै बंगुर काँशी नगए
यहाँ आपत पर्न सक्छ ।

त्यसैले म. काँशी तर्फ लागें
तपाईं नभए पनि आफैं मपाँई भई
आजकाल आधुनिक फेशन छ
म जस्तो सबैले
आफ्नो लोक संस्कृति बिर्सन्छ
किनकि, मेरो नाम फेशन हो
अन्धो मूर्ख अत्याधुनिकता
विकृति विसंगति ल्याउने
मेरो प्रतिष्ठीत काम हो ।



## धन्य हे, ईश्वर !

एक दिन दुई दिन गर्दै
धेरै दिन बिति सके
धेरै समय पछि होइन
चाँडै घर फर्कने कोशिश गरें
यस्तै-यस्तै परिस्थिति र परिवेशमा
इच्छा, आकांक्षा गुज्रिरह्यो
यो बिहानी यो दिन यो रात
छिन-छिन गन्ति गरिरहेछु
बाचा त गरेको थिएँ
चाँडै फर्की आउँछु भनेर
हाम्रो प्यार ताजै रहन्छ भनेर
भूलेको छैन बिर्सेको होइन
त्यो पवित्र मायालाई
भन्नु पर्‍यो धन्य हे, ईश्वर
त्यो तिम्रो दयालाई ।

❋ ❋ ❋

# मनै रुवायो

(गीत)

मनै रुवायो वनै सुसायो
परदेशीको, दिलैमा विरह चल्यो ।

माया नमारे सम्झना गरे
गाउँघरको यादमा आँसु बगाएँ ।

देख्छन् सपना गर्छन् कल्पना
मुटु साटी ल्याउने छुट्टीमा ।

आशा लामो छ माया टाढो छ
कृपा गरुन दैवले माया साँचो छ ।

नौलो छ ठाउँ अनौठो गाउँ
बारम्बार पीर यो मन छैन अधिर ।

❋ ❋

## देशको माया

आएको पत्र खोलेर हेर्छु
सम्झना मलाई लेखेको साथीले
लागेको बानी नेपाली हामी
राष्ट्रको चिन्ता बढेको मलाई
देशको बारे कौतुहल जाग्छ धेरै
विदेशिएको निष्ठुरी भनि
लेख्दैनन् देशको बारे खबर केही
हुदैन दुःख बुझिनन् मर्म परदेशीको
परदेश नगई

संयोगको साथ भेट भयो आज
आत्मीय साथी बोलेको जाती
मनको कुरा दुःखहोस् जे-जति
खुशी साथ आउछु तिम्रो नजिक
तिमी बोल्दैनौ नजाती
के कसूर मेरो गल्ति छ के कति ?

सुनेको थिए भर्खर मात्र
राष्ट्र सेवक बन्यौ रे अस्ति
खुलेको मन झुकेको झन
तिमी नेता
बोलेर मैले गरेको सम्मान
जुन दृष्टि राख्यौ परदेशीमाथि
धन्य छ, राष्ट्र सेवक तिमीलाई साथी

तिमीलाई जस्तो देशको माया
झन प्रगाढ छ हामी प्रदेशीलाई
किनकि तिमीले कहील्यै
मातृभूमित्वको अभाव महसूस गरेका छैनौ
गाउँघर देशको माया धेरै उसलाई हुन्छ
जसले क्षणभरलाई भएपनि गुमाएको हुन्छ
नपत्याए साथी सोधेको जाती
टुहुरो छोरा-छोरीलाई
वातावरण बाध्यताले परदेशिनु विवशीत
बेसहारा आत्मालाई
त्यसैले साथी बुझेको जाती
परदेशी माथि नगर त्यो दृष्टि ।

❋❋ ❋❋

## परिचय



| | |
|---|---|
| *नाम–* | विश्वास दीप तिगेला लिम्बू |
| *जन्म–* | १२ नोभेम्वर, १९७६ |
| *योग्यता–* | प्रमाण-पत्र तह, ब्रिट्रिस एस.एल.पी. |
| *ठेगाना–* | हात्तीखर्क-२, सुन्तले,<br>धनकुटा,नेपाल<br>हाल–ब्रुनाई |
| *अनुभव–* | परदेशी जीवन |
| *सामाजिक सेवा–* | आर्जीवन सदस्य;<br>किरात याक्थुङ चुम्लुङ,<br>कि.ध. तथा सा.उ.संघ<br>एवं विविध |
| *भ्रमण–* | मलेशिया,ब्रुनाई, भारत,बेलायत,<br>सिंगापुर बाटोमा पर्ने बहराईन,दुवई,<br>श्रीलंका, थाईल्याण्ड र जर्मन । |

–प्रकाशक